।।श्रीमते रामानुजाय नमः।।

# भगवान्‌को मङ्गलाशासन




लेखक

**श्रीकृष्णमाचार्य**



प्रकाशक

**श्री दुर्गाप्रसाद सवाल**

[illegible] - ४ [illegible]

।।श्रीमते रामानुजाय नमः।।



# भगवान्‌को मङ्‌गलाशासन

लेखक

**श्रीकृष्णमाचार्य**


— प्रकाशनव्यवस्था —

वैकुण्ठवासी **शोभाकान्ति उपाध्याय** एवम्
**अम्बिकाप्रसाद उपाध्याय** दम्पतिको पुण्यस्मृतिमा
सुपुत्र **श्री दुर्गाप्रसाद खनाल** (खस्यौली-४ पाल्पा)
द्वारा प्रकाशित

**प्रथममुद्रण** - ५०० प्रति
**मूल्य रू.** - २५/

**सर्वाधिकार** - लेखकमा सुरक्षित
वि.सं. २०६३ श्रावण

**प्राप्तिस्थान** -


श्री दुर्गाप्रसाद खनाल
औद्योगिक क्षेत्रको समीप
वा.नं. १६, नेपालगञ्ज
बाँके
☎ - (०८१) ५२१७९३


श्री योगेश्वर ज्ञवाली
माण्डव्यनिवास
मन्दिरमार्ग
गैंडाकोट १, नवलपरासी

- ९८४५०४६९७३

**मुद्रक** - गणेश छापाखाना
मेनरोड, नारायणगढ
फोन - (०५६) ५२०५४८

# पुरोवाक्

पशु-पक्ष्यादिहरूभन्दा अधिक ज्ञानसम्पन्न मनुष्यले सधैं सुखको अपेक्षा राख्दछ । त्यसको लागि उसले उपायमार्गहरूको अन्वेषण गर्दछ । ती मार्गहरू दुई प्रकारका छन् । एउटा श्रेयोमार्ग अर्को प्रेयोमार्ग । श्रेयः भनेको - श्रेष्ठ मोक्षलाई प्रदान गर्नेवाला मार्ग हो । यस मार्गले दुःखको लेश पनि नमिलेको शाश्वत आनन्दलाई प्रदान गर्दछ । त्यही भएर त्यो, (प्रेयोमार्ग) मानवको लागि प्रिय नै भएता पनि दुःखभूयिष्ठ छ । विवेकसम्पन्न मानवले श्रेयोमार्गलाई नै अवलम्बन गरेर शाश्वतसुखलाई प्राप्त गर्दछ । अज्ञानी मानवले तात्कालिक रूपमा प्रिय लाग्ने भोगमार्गलाई नै अवलम्बन गर्दछ । त्यस्तो व्यक्ति उत्तम पुरुषार्थदेखि अवश्य नै वञ्चित रहन्छ । निरवधिक दुःख र त्यसको कारण मानिने जन्मपरम्परा उसको लागि अनिवार्य बन्दछ । श्रेयोमार्ग, विवेकद्वारा नै लभ्य हुन्छ । जसले वैषयिक भोगमार्गलाई रोज्दछ त्यो व्यक्ति शाश्वत पुरुषार्थबाट दूर हुन्छ । उक्त विषयलाई उपनिषद्को मन्त्रले यसरी स्पष्ट गर्दछ -

**'अन्यच्छ्रेयोऽन्यदुतैव प्रेयः**
**ते उभे नानार्थे पुरुषं सिनीतः ।**
**तयोश्श्रेय आददानस्य साधु भवति**
**हीयतेऽर्थात् य उ प्रेयो वृणीते' ।।**

ब्रह्मोपासनाद्वारा जन्म-मृत्यु दुवैलाई पार गर्न सकिन्छ । उक्त विषयलाई **"जन्ममृत्यू तरति"** भन्ने कठोपनिषद्को वाक्यले निरूपण गरेको छ । यस प्रसङ्गमा एकजना महाकविको मधुरोपदेशात्मक यौटा श्लोक अर्थसहित ग्रहण गर्ने योग्य छ -

**"मृत्योर्बिभेषि किं मूढ । भीतं मुञ्चति किं यमः ?**
**अजातं नैव गृह्णाति कुरु यत्नमजन्मनि ।।"**

हे विवेकहीन मनुष्य ! मृत्युसँग किन डराउँछस् ? तँ डराए पनि त्यो यमराजले तँलाई छोड्दैन । अनि यमराजको बन्धनबाट छुट्कारा

पाउने उपाय के छ त ? भनेर सोद्धछस् भने सुन् । जसले जन्म लिँदैन त्यो व्यक्तिलाई यमराजले छुन सक्दैन । जन्म हुँदा पो मरण हुन्छ र ? त्यही भएर पुनर्जन्मराहित्यको लागि प्रयत्न गर्नु भन्ने उक्त श्लोकको भाव हो ।।

पूर्वोक्त उपनिषद्को उपदेश अनुसार शाश्वत भगवदनुभव प्राप्त गर्नु नै मानव जीवनको प्रधान लक्ष्य हो । यसै क्रममा एक तत्त्वदर्शी महापुरुषको द्राविडभक्तिसाहित्यमा विद्यमान गम्भीर भगवदनुभूतिलाई दिग्दर्शनको रूपमा यस ग्रन्थमा आस्वादन गर्ने प्रयत्न गरौं ।।

## हार्दिक कृतज्ञताज्ञापन

लौकिकरूपमा उन्नत सर्वकारीय सेवामा संलग्न रहेर पनि आध्यात्मिकमार्गमा र सज्जनहरूको सद्रुपदेशमा विशेष अभिरुचि राख्नेवाला **मामाश्री श्रीमान् दुर्गाप्रसाद खनालज्यूले** आफ्ना वैकुण्ठवासी माता-पिता **शोभाकान्ति उपाध्याय** एवम् **अम्बिकाप्रसाद उपाध्याय**-दम्पतिको पुण्यस्मृतिमा श्रद्धापूर्वक यो "**भगवान्को मङ्गलाशासन**" नामक आध्यात्मिक ग्रन्थलाई प्रकाशन गरेर श्रद्धालु सज्जनहरूको करकमलमा सादर समर्पण गर्दैहुनुहुन्छ । उहाँहरूको सम्पूर्ण परिवारको उत्तरोत्तर अभ्युन्नतिको अभिलाषा गर्दै भगवान्को श्रीचरणारविन्दमा प्रार्थना गर्दछु । अन्तिममा श्रीमान् **दुर्गाप्रसाद खनालज्यूको** यो उत्तमकार्यलाई अभिनन्दन गर्दै उहाँको विषयमा हार्दिक कृतज्ञता ज्ञापन गर्दछु ।।

विनीत निवेदक-
**श्रीकृष्णमाचार्य**

।श्रीमते रामानुजाय नमः।।

# आमुख

स्वस्ति हस्तिगिरिमस्तशेखरः
सन्तनोतु मयि सन्ततं हरिः।
निस्समाभ्यधिकमभ्यधत्त यं
देवमौपनिषदी सरस्वती।।

(श्रीवरदराजस्तव १)

वैदिकवाङ्मयाराधनामा निष्ठा राख्ने समस्त सत्सम्प्रदाय स्वरूपज्ञ महानुभावहरूको सन्निधानमा सविनय सादर निवेदन।।

मनुष्यजीवनको वास्तविक लक्ष्य भगवत्कैङ्कर्यप्राप्ति नै हो। जीवनलाई उज्जीवनको रूपमा सुधार्नको लागि हाम्रा हितैषी परमर्षिहरूले शास्त्रग्रन्थहरूद्वारा हामीहरूलाई पदे पदे उद्बोधन गर्नुभएको छ। भगवत्सेवाको लागि, शास्त्रीयविधानको पालन गर्दै दीर्घकालसम्म यस लीलाविभूतिमा रहनपाऊँ भनेर वैदिकमन्त्रहरूमा प्रार्थना गरिएको छ। ''शतं जीवेम शरदस्सुवीराः'' ''जीवेम शरदश्शतम्'' ''जिजीविषेच्छतग्ं समाः'' इत्यादि वचनहरू स्मरणीय छन्। उपनिषद्वाङ्मयले मानवजातिलाई जगाउँदै ज्ञानीहरूको सन्निधानमा गएर तत्त्वज्ञान

प्राप्त गर्नु भनेर निर्देशन दिएको छ। ''**उत्तिष्ठत जाग्रत प्राप्य वरान्निबोधत**'' यो कठोपनिषद्को सूक्ति हो। जुन व्यक्तिले आत्मस्वरूप र परमात्माको स्वरूपलाई ज्ञानीहरूबाट जान्ने प्रयास गर्दैन त्यसले आफ्नो ठूलो हानि गर्दछ भनेर केनोपनिषद्ले पनि हामीहरूलाई सचेत गराएको छ। ''**न चेदिहावेदीत् महती विनष्टिः**''। ''**महाजनो येन गतस्स पन्थाः**'' भनेर श्रीमहाभारतमा बताए अनुसार परमप्रामाणिक महर्षिहरू, दक्षिणभारतमा अवतार लिएका आल्वार्हरू, सिद्धान्तसंरक्षणलाई नै आफ्नो व्रतको रूपमा पालन गरेका नाथ–यामुन–भगवद्रामानुज आदि पूर्वाचार्यहरू जस्ता तत्त्वदर्शीहरूको विषयमा हामीहरू सधैं अधमर्ण (ऋणी) नै रहने छौं। यी महानुभावहरूले आफ्नो आचरण एवम् अमूल्य महोपदेशहरूद्वारा सन्मार्गमा हिंडेर इहलोकमा क्रमबद्ध दिनचर्या र परलोकमा मोक्ष (शाश्वत भगवत्कैङ्कर्य) प्राप्त गर्नकोलागि प्रेरणा दिनुभएको छ। यस्ता माननीय शिष्टजनहरूले आचरण गरेर देखाएको राजमार्गमा चल्नु भनेर तैत्तिरीयोपनिषद्ले ''**यथा ते तत्र तत्र वर्तेरन् तथा तत्र वर्तेथाः**'' इत्यादिरूपमा मानवहरूको लागि महोन्नत सन्देश दिएको कुरा अविस्मरणीय छ।।

यसै क्रममा १२ जना आल्वार् (भगवद्भक्तिसागरमा निमग्न ज्ञानी) हरूले उपदेश गरेका, तमिलभाषामा आविर्भाव भएका ''**दिव्यप्रबन्ध**'' नामले प्रसिद्ध ४ हजार छन्दोबद्धगाथाहरूले,

भक्तिसाहित्यमा अत्युन्नतस्थानलाई प्राप्त गरेकाछन्। भाषा तमिल हो र पनि प्रवेश गर्ने प्रयास गर्दा त्यस साहित्यमा अमृतभाण्डहरू नै मिल्छन्। भगवान्का दिव्य कल्याणगुणहरूमा तलस्पर्शिरूपले अवगाहन गरेर उहाँहरूले आफ्ना उपदेशहरूद्वारा सहृदयहरूलाई पनि सुधास्वादन गराउनुभएको छ।।

श्रीविष्णुचित्तआल्वार् यी ज्ञानीहरूमध्ये सातौं संख्याको महनीय महापुरुष हुनुहुन्छ। उहाँले दुईवटा दिव्यप्रबन्धहरू गाउनुभएको छ। पहिलो प्रबन्धको नाम हो ''**तिरुप्पल्लाण्डु**''। दोस्रो प्रबन्ध, ''**पेरियाल्वार्तिरुमोलि**'' नामले प्रसिद्ध छ। पहिलोग्रन्थमा १२ गाथाहरू छन् भने दोस्रोमा ४६१ गाथाहरू छन्। सबै मिलाउँदा ४७३ गाथाहरू छन्। पल्लाण्डु प्रबन्धमा भगवान्को मङ्गलाशासन गरिएको छ। दोस्रो ग्रन्थमा प्रायः बालकृष्णभगवान्का दिव्य चरित्रहरू वर्णन गरिएकाछन्। भगवान्लाई उहाँले वात्सल्यभावले आराधना गर्नुभएको छ।।

**मङ्गलाशासन**—भनेको मङ्गलको कामना गर्नु हो। यो प्रेमकार्य हो। यस प्रकृतिमण्डलमा परमात्मालाई कसैले अनर्थ पु-याउँछन् कि भन्ने आशङ्काले स्नेहदशामा विह्वल भएर उहाँले भगवान्को अनेकौं हजार वर्षसम्म मङ्गल होस् भन्ने कामना गर्दै सबै मानवहरूलाई प्रभुको आरती (मङ्गलाशासन) मा सम्मिलित हुनकालागि निमन्त्रण गर्नुहुन्छ।।

उहाँको विलक्षणभावनालाई दुई गाथाहरूमा मात्र यति

बेला विस्तृत विवरणको साथमा आस्वादन गर्ने प्रयत्न गरौं। ''**पल्लाण्डु पल्लाण्डु**'' ''**अडियोमोडुम्**'' यी दुई अलग अलग गाथा हुन्। प्राय: हाम्रो नेपालमा पनि श्रीवैष्णव देवालयहरूमा र वैष्णव भागवतोत्तमहरूका भवनहरूमा भक्तिपूर्वक यी गाथाहरूको उच्चारण हुनेगर्दछ। भगवान्‌को मङ्गलाशासन गर्नु नै उत्तम अधिकारीको वास्तविक कर्तव्य हो।।

आफ्ना परमाराध्य आचार्यचरण, दक्षिणभारतका सुप्रसिद्ध न्याय–वेदान्तविद्वान्, श्रीरामानुजसिद्धान्तका अग्रगण्य प्रचारक (वैकुण्ठवासी) श्रीमदुभयवेदान्तप्रवर्तक **ते० कं० गोपालाचार्य स्वामीजीमहाराजको** सन्निधानमा आफूले अध्ययन गर्दा प्राप्त भएको अर्थविशेषलाई स्वयंमा मात्र जीर्ण नगरेर सबै श्रद्धालु सज्जनहरूलाई बाँडौं भन्ने सदिच्छाले यो स्वल्पप्रयास गरेको छु।।

श्रीपेरियवाच्चान्पिल्लै नामक कृष्णपादसूरिको तमिल व्याख्याको आधारमा आफ्नो आचार्यचरणबाट प्राप्त भएका रहस्यहरूलाई पनि सम्मिलित गराएर मातृभाषा नेपालीमा यो उपहार समर्पण गर्दैछु।।

*–स्वस्ति श्रीर्दिशतात्–*

विद्वज्जनविधेय

**श्रीकृष्णमाचार्य**

गैंडाकोट १, नवलपरासी

।।श्रीमते रामानुजाय नमः।।

# भगवान्‌को मङ्गलाशासन

## (पल्लाण्डुगाथाको विवरण)

समस्त वेदराशिको बीजभूत प्रणवलाई वेदाध्ययनको प्रारम्भमा र समाप्तिमा पनि ''**हरिः ओम्**'' भनेर हरिशब्दलाई मिलाएर उच्चारण गर्ने प्रक्रिया प्रसिद्ध छ। त्यस्तैगरी ''**द्राविडवेद**'' नामले प्रसिद्ध आल्वार्‌हरूद्वारा अनुगृहीत दिव्यप्रबन्धहरूको अध्ययन गर्दा पनि आरम्भमा र अध्ययनको समाप्तिमा भगवान्‌को सन्निधिमा श्रीविष्णुचित्तआल्वार् द्वारा विरचित ''**तिरुप्पल्लाण्डु**'' (मङ्गलाशासन) प्रबन्धको अनुसन्धान (अध्ययन) गर्ने क्रम सुप्रसिद्ध छ। यसरी हेर्दा वेदको लागि प्रणव झैं दिव्यप्रबन्धको लागि यो ''**पल्लाण्डु**'' नामक प्रबन्ध सारतम र मङ्गलार्थक मानिन्छ। आदि र अन्तमा ओङ्कारको उच्चारण विना गरेको वेदाध्ययन निष्प्रयोजन हुन्छ भनेर शास्त्रले बताएको छ। त्यसैगरी श्रीवरवरमुनीन्द्रस्वामीजीले ''उपदेशरत्नमाला'' नामक प्रबन्धमा ''**कोदिलवाम् आल्वार्**'' भन्ने एउटा पाशुर (छन्दोबद्ध तमिलपद्य) मा द्रविडप्रबन्धको अध्ययनको आरम्भमा प्रणवलाईजस्तैगरी यसलाई पनि उच्चारण (अध्ययन) गर्नु आवश्यक छ भनेर बताउँदै यसको अध्ययन नगरीकन कुनै पनि दिव्यप्रबन्धको अध्ययन गर्नहुँदैन भनेर सूचित गर्नुभएको छ।।

।।श्रीमते रामानुजाय नमः।।

# भगवान्को मङ्गलाशासन

## (पल्लाण्डुगाथाको विवरण)

समस्त वेदराशिको बीजभूत प्रणवलाई वेदाध्ययनको प्रारम्भमा र समाप्तिमा पनि ''**हरिः ओम्**'' भनेर हरिशब्दलाई मिलाएर उच्चारण गर्ने प्रक्रिया प्रसिद्ध छ। त्यस्तैगरी ''**द्राविडवेद**'' नामले प्रसिद्ध आल्वार्हरूद्वारा अनुगृहीत दिव्यप्रबन्धहरूको अध्ययन गर्दा पनि आरम्भमा र अध्ययनको समाप्तिमा भगवान्को सन्निधिमा श्रीविष्णुचित्तआल्वार् द्वारा विरचित ''**तिरुप्पल्लाण्डु**'' (मङ्गलाशासन) प्रबन्धको अनुसन्धान (अध्ययन) गर्ने क्रम सुप्रसिद्ध छ। यसरी हेर्दा वेदको लागि प्रणव झैं दिव्यप्रबन्धको लागि यो ''**पल्लाण्डु**'' नामक प्रबन्ध सारतम र मङ्गलार्थक मानिन्छ। आदि र अन्तमा ओङ्कारको उच्चारण विना गरेको वेदाध्ययन निष्प्रयोजन हुन्छ भनेर शास्त्रले बताएको छ। त्यसैगरी श्रीवरवरमुनीन्द्रस्वामीजीले ''उपदेशरत्नमाला'' नामक प्रबन्धमा ''**कोदिलवाम् आल्वार्**'' भन्ने एउटा पाशुर (छन्दोबद्ध तमिलपद्य) मा द्रविडप्रबन्धको अध्ययनको आरम्भमा प्रणवलाईजस्तैगरी यसलाई पनि उच्चारण (अध्ययन) गर्नु आवश्यक छ भनेर बताउँदै यसको अध्ययन नगरीकन कुनै पनि दिव्यप्रबन्धको अध्ययन गर्नहुँदैन भनेर सूचित गर्नुभएको छ।।

यस सन्दर्भ अनुसार दिव्यप्रबन्धहरूमा यस ग्रन्थको अत्यन्त प्रशस्ति छ भन्ने विषय स्पष्ट हुन्छ। लगभग चारहजार सङ्ख्याले युक्त भएको सबै प्रबन्धहरूको व्याख्यान लेख्नुभएका "पेरियवाच्चान्पिल्लै" नामक श्रीकृष्णपादसूरिले १२ गाथाले युक्त यस "**तिरुप्पल्लाण्डु**" प्रबन्धको सम्प्रदायार्थगर्भित विपुलव्याख्या लेख्नुभएको छ। द्राविडप्रबन्धहरूमाथि उहाँका व्याख्यानहरू अवतरित नभएको भए आल्वार्हरूको अन्तरङ्गभावलाई अवगाहन गरेर ग्रहण गर्ने सामर्थ्य कसैमा पनि रहने थिएन भनेर श्रीवरवरमुनिस्वामीजीले **उपदेशरत्नमालामा** बताउनुभएको छ। अत्यन्त प्रशस्त (अमूल्य) रत्नलाई छिपाउनको लागि (सुरक्षितराख्नको निमित्त) एउटा राम्रो पेटीको जसरी आवश्यकता पर्दछ त्यसैगरी "**तिरुप्पल्लाण्डु**" प्रबन्धको सारलाई आफूमा गर्भित गरेको उहाँको यो व्याख्यान सुवर्णपेटिकाजस्तो हो भनेर ग्रहण गर्नुपर्दछ।।

श्रीवैष्णवसम्प्रदायनिष्ठ भागवतोत्तमहरूलाई यस प्रबन्धको प्रारम्भमा विद्यमान दुई गाथाहरूको मात्र पहिला आस्वादन गराऊँ भन्ने इच्छाले तमिलव्याख्यानमा भएको अर्थविशेषलाई विवरण गर्ने प्रयत्न गर्दै छु।।

कुनै पनि व्याख्यानकर्ताहरूले सर्वप्रथम अवतारिकाको रूपमा ग्रन्थको प्रशस्तिलाई र ग्रन्थमा प्रतिपादन गरिएको विषयवैलक्षण्यलाई, साथै ग्रन्थरचनाको कारणलाई पनि विवरण

गर्ने गर्नुहुन्छ। त्यसैगरी यहाँ व्याख्यानारम्भमा **व्याख्यातृचक्रवर्ती श्रीपेरियवाच्चानुपिल्लैस्वामीजीले** द्राविडभाषामा मधुर अवतारिकाको विन्यास गर्नुभएको छ। त्यस अवतारिकाको सारांशलाई अगाडि ग्रहण गर्ने प्रयत्न गरौं।।

## अवतारिका

तैत्तिरीयोपनिषद्‌को नारायणानुवाकले ''**पतिं विश्वस्यात्मेश्वरम्**'' भनेर, साथै श्वेताश्वतरोपनिषद्‌ले ''**तमीश्वराणां परमं महेश्वरम्**'' भनेर परमात्माको स्वरूपलाई निर्णय गरेका छन्। विश्वका उहाँ स्वामी हुनुहुन्छ। सर्वस्वतन्त्र उहाँ (परमात्मा) कोलागि अर्को ईश्वर छैन। ईश्वर मानिने समस्त देवताहरूका पनि उहाँ महेश्वर हुनुहुन्छ भन्ने उक्त उपनिषद्‌वाक्यहरूको भाव हो। ती वाक्यहरूमा रहेका '**पति**' शब्द र '**ईश्वर**' शब्दहरूले परमात्माको स्वामित्व (अधिकार) र नियन्तृत्वलाई बताउँदछन्। ''**तेन विना तृणाग्रमपि न चलति**'' भन्ने संस्कृतको न्याय अनुसार अन्तर्यामी परमात्माको संकल्प नभईकन कुनै पनि पदार्थ चल्न सक्दैन। त्यही भएर उहाँ सर्वनियामक हुनुहुन्छ भन्ने विषय अवगत हुन्छ।

त्यसैगरी '**यस्यास्मि**' भन्ने यजुर्वेदवाक्य अनुसार र ''**परवानस्मि**'' भन्ने श्रीरामायणको वाक्यमा बताए अनुसार, साथै ''**दासोऽहं वासुदेवस्य**'' भन्ने स्मृतिवाक्यमा प्रतिपादन गरिए अनुसार हेर्दा पनि जीवात्माको स्वरूप, परमात्माको परतन्त्र छ भनेर निर्णय गरिएको छ। यसरी जीव र ईश्वरको

स्वरूपलाई राम्रोसँग जानिसकेपछि त्यसै ज्ञानको अनुरूप भगवत्परतन्त्र समस्तजीवहरूले प्रभुकै आराधना गरेर उज्जीवन प्राप्त गर्नु नै वास्तविक कर्तव्य हो।।

तर त्रिगुणात्मक अचेतन प्रकृतिमा अनादिकालदेखि मिलेका जीवनहरूले त्यस प्रकृतिसम्बन्धको प्रभावले गर्दा स्वस्वरूपलाई जान्न नसकेर त्यस प्रकृतिदेखि अभिन्नको रूपमा आफूहरूलाई भावना गर्दछन्। उनीहरूको प्रकृतिसँग रहेको सम्बन्ध अयःपिण्ड (फलामको डल्लो) सँग रहने अग्निसंसर्गजस्तो अविभाज्य छ। अग्निमा प्रक्षिप्त भएको अयःपिण्ड, केहीबेरसम्म आफूमा भएको नीलरूप र काठिन्यालाई गुमाएर (छोडेर) अग्नितापको आधिक्यले गर्दा अग्निकै जस्तो भास्वर (प्रकाशमान) वर्णलाई प्राप्त गरेर यो अग्निपिण्ड नै हो भन्न मिल्नेगरी अभेदज्ञानको हेतु बन्दछ। यसरी सहजरूपमै ज्ञानानन्दस्वरूप एवं भगवत्परतन्त्रको रूपमा विद्यमान जीव पनि अनादिकालदेखिको प्रकृतिसंसर्गले आच्छादित आफ्नो स्वरूपलाई जान्न नसकेर प्रकृतिको कार्यको रूपमा रहेको देहसम्बन्धलाई लिएर ''**देवोऽहम्**'', ''**मनुष्योऽहम्**'' भनेर आफूलाई त्यही देहस्वरूपकै रूपमा भावना गर्दछ। देहात्माभिमान (शरीरलाई नै आत्मा मान्ने) रूप अज्ञानको साथमा उस जीवलाई पुत्र–मित्र– कलत्र–क्षेत्र–आदि प्राकृत वस्तुहरूमा ममताबुद्धि पनि बढ्दै गयो। अनादिकालदेखि प्रवाहरूपमा आएका यी अहङ्कार– ममकारहरूद्वारा उसमा म नै

स्वामी हुँ, सर्वनियन्ता हुँ भन्ने दुर्बुद्धि बलियो भयो। ईश्वरको धर्म मानिने स्वामित्व र नियन्तृत्वलाई उसले आफूमाथि आरोपण ग-यो। सहजरूपमै आफू भगवत्परतन्त्र हुँ भन्ने विषयलाई भुल्यो। यो अचित्सम्बन्धको प्रभाव, उसलाई सन्निहित रूप—रस—गन्धादि विषयहरूमाथि भोग्यताबुद्धि उत्पन्न गराएर उनीहरूमा गाढ प्रेम र आफूले झैं ती विषयहरूलाई अपेक्षा गर्ने अरू व्यक्तिहरू माथि प्रबल द्वेष उत्पन्न गराएर क्रमैले दुःखपरम्पराको कारण बन्यो। यसरी अज्ञानद्वारा जन्म—जरा—मरणरूप दुःखपरम्परामा परेर आकुल—व्याकुल भएका जीवहरूलाई देखेर परमदयालु ईश्वरले, यिनीहरूलाई तत्त्वको बोध गराएर ''यसरी चल्नु'' भनेर हितोपदेश गरेर उज्जीवित गराउनको लागि शास्त्ररूप दीप (बत्ती) प्रदान गर्नुभयो। श्रीपराशरभट्टर्स्वामीजीले श्रीरङ्गराजस्तवको उत्तरशतकमा यस विषयलाई निम्नश्लोकमा विवरण गर्नुभएकोछ—

''हर्तु तमः सदसती च विवेक्तुमीशो
मानं प्रदीपमिव कारुणिको ददाति।
तेनावलोक्य कृतिनः परिभुञ्जते तं
तत्रैव केऽपि चपलाः शलभीभवन्ति।।''

**मानम्** – भनेको प्रमाण— अर्थात् शास्त्र हो। दयाशाली ईश्वरले के राम्रो हो के नराम्रो हो—विवेचन गरेर जान्नको लागि र अज्ञानरूप अन्धकारलाई हटाउनका लागि यो शास्त्रप्रमाणरूप दीप मानवहरूको लागि प्रदान गर्नुभयो। अन्धकारमा छट्पटाएको

व्यक्तिले दीपको सहाराले अन्धकारलाई दूर गरेर तत्तत् वस्तुहरूलाई चिनेर आवश्यक वस्तुहरूलाई ग्रहण गर्दछ र दुःखहेतु मानिने पदार्थहरूलाई विसर्जन गरिदिन्छ। त्यसैगरी यो जीवले पनि यो शास्त्ररूपी दीपद्वारा आफूमा भएको अज्ञानलाई दूर गरेर ईश्वरको स्वरूप र आफ्नो (जीवको) स्वरूपलाई निष्कर्ष गरेर कष्टको हेतुको रूपमा विद्यमान प्रकृतिसम्बन्धको त्याग गरेर आफ्नो (ईश्वरको) आराधना (उपासना) गर्नेछ र आफ्नो (भगवान्को) सन्निधिमा आइपुग्ने छ भन्ने ईश्वरको अभिप्राय थियो। ज्ञानी महापुरुषहरूले त्यो शास्त्रलाई स्वीकार गरेर केहीजना उज्जीवित हुनुभयो। तर चपलबुद्धि भएका अनेकन् व्यक्तिहरूले त्यो शास्त्र सँग द्वेष गरेर दीप (बत्ती) माथि परेर जलेका फटेङ्ग्रा आदि किराहरूले झैं विनाशलाई प्राप्त गरे। उनीहरूमा त्यस्तो सद्बुद्धि प्राप्त नहुनुको कारण, अनेकौं जन्मदेखि चिल्लो पदार्थले पक्रिएजस्तोगरी पक्रिएको वासनारूप दुस्संस्कार हो।।

यसरी आफ्नो आज्ञारूप शास्त्रले प्रजाहरूमाथि काम नगरेको देखेर उनीहरूको उद्धारकोलागि ईश्वरले अर्को उपाय अपनाउनुभयो। अहङ्कारद्वारा आफ्नो आज्ञालाई धिक्कार (तिरस्कार) गर्ने देशमाथि चक्रवर्ती राजाले आफै सैन्य आदिको साथमा गएर जसरी त्यो देशलाई स्वाधीन गर्दछन् त्यसैगरी ईश्वरले पनि स्वयं यी जीवात्माहरूको उद्धार गर्नको लागि राम–कृष्णादिरूपले अवतार लिनुभयो। ती अवतारहरूमा आफूले

केही धर्महरूको आचरण गरेर लोकको लागि स्वयम् आदर्श बनेर लोकस्थ व्यक्तिहरू पनि आफूजस्तै बन्नेछन् भन्ने भावना राख्नुभयो। रामको रूपमा अवतार लिएर ''**पितुर्वचननिर्देशात्**'', ''**भरद्वाजस्य शासनात्**'' भनेअनुसार पिताको आज्ञाको परिपालन, त्यसैगरी मान्यजनहरूको आदेशको परिपालन, यो उत्तम धर्म हो भनेर आचरणद्वारा देखानुभयो। अनि लक्ष्मणजीद्वारा आफ्नो स्वामीको सन्निधानमा निष्कलङ्कभक्तिपूर्वक सेवा (शेषवृत्ति) गर्नु नै जीवको मुख्यधर्म हो भनेर प्रकट गराउनुभयो। त्यसैगरी ''**राज्यंचाहं च रामस्य**'' म र यो राज्य दुवै रामका परतन्त्र हौं, त्यहीभएर मलाई राज्यको परिपालन गर्ने अर्हता छैन भनेर राज्यदेखि टाढै रहँदै जसरी भरतजीले रामको आज्ञाको परतन्त्र भएर प्रवर्तन गर्नुभएको थियो त्यसैगरी जीवले पनि प्रवर्तन गर्नुपर्दछ भनेर पारतन्त्यरूप गुणलाई व्यक्त गर्नुभएको थियो। भगवत्परतन्त्र एवं भरतजीको बिषयमा विधेय (विनम्र) शत्रुघ्नजीद्वारा भागवतहरूको परतन्त्र भएर रहनु नै अत्युत्तम धर्म हो भनेर निरूपण गर्नुभयो।।

अनि यसैगरी श्रीकृष्णावतारमा पनि पाण्डवहरूको सारथिको रूपमा र दूतको रूपमा प्रवर्तन गरेर आफ्नो भक्तपराधीनतालाई व्यक्त गर्नुभयो। यति मात्र नभएर ''**यद्यदाचरति श्रेष्ठः**'' भनेर भगवद्गीतामा स्वयंले बताए अनुसार अनेक धर्महरूको आचरण गरेर देखाउनुभयो। त्यतिमात्र नभएर उपदेश पनि गरेर यो

जीवराशिको उद्धारको लागि अनेकौं प्रयत्नहरू गर्नुभयो। तर भगवान्‌ले गरेको दोस्रो प्रयत्न पनि विफल भयो। समस्त जगत्‌का कारणभूत व्यक्ति (परमात्मा) हाम्रोलागि सुलभ बनेर कृपा गर्दैहुनुहुन्छ! भन्ने ज्ञान नभएका यी मूढ चेतनहरूले उहाँको सौलभ्यलाई चिन्न नसकेर **"अवजानन्ति मां मूढा:"** भने अनुसार उहाँलाई नै असमर्थको रूपमा गणना गरिदिए। त्यतिबेला दोस्रो प्रयत्न पनि सफल नभएको हुनाले ईश्वरले नयाँ उपायको अवलम्बन गर्नुभयो। क्रूर सिंह–व्याघ्रादि जन्तुहरूलाई वशमा गर्न चाहने व्यक्तिहरूले सुलभरूपमा उनीहरूलाई पक्राउ गर्नको लागि अर्को मृगलाई प्रतिनिधिको रूपमा देखाएर ती क्रूरजन्तुहरूलाई जालमा पार्दछन्। त्यसैगरी ईश्वरले पनि केही जना महानुभावहरूलाई यी जीवहरूकै समानगरी सजातीयरूपमा लोकमा अवतरित गराएर उहाँहरूको उपदेशहरूद्वारा र आचरणद्वारा यी मनुष्यहरूलाई सन्मार्गमा प्रवृत्त गराउन चाहनुभयो। आफूसँग सजातीय रूपमा रहेका व्यक्तिहरूलाई देखेर आफूपनि त्यसैगरी प्रवर्तन गरेर आफ्नो जीवनलाई सुधार गरौं भन्ने आशा गर्नु जीववर्गमा भएको सहज धर्म हो। त्यसै अभिप्रायले परमात्माले १२ जना आल्वार्‌हरूलाई अवतरित गराउनुभयो। त्यस्ता महानुभावहरूमा **तिरुप्पल्लाण्डु** (मङ्गलाशासन) प्रबन्धका निर्माता **श्रीविष्णुचित्तआल्वार्** मुख्य हुनुहुन्छ। यहाँसम्म बताइएको उपोद्घात अनुसार शास्त्रावतरणद्वारा र आफ्नो अवतारद्वारा पनि साध्य

हुन नसकेको चेतनोज्जीवनलाई परमात्माले यी आल्वार्द्वारा सिद्ध गर्न सक्नुभयो भनेर बताइएको हुनाले यहाँका उपदेशरूप प्रबन्धहरूमा अत्यन्त विलक्षण प्रभाव छ भन्ने विषय स्पष्ट हुन्छ।।

श्रीविष्णुचित्तआल्वार्को जीवनी, लेखकको पूर्वमुद्रित "**अमृतलहरी**" नामक ग्रन्थबाट ग्रहण गर्न सकिन्छ।।

## मङ्गलाशासनको समर्थन

शास्त्रले परमात्मालाई अवाप्तसमस्तकाम (परिपूर्ण) एवं सत्यसङ्कल्पको रूपमा निरूपण गरेको छ। आफ्नो सङ्कल्पद्वारा जस्तो फललाई पनि उहाँले प्राप्त गर्न सक्नुहुन्छ। उहाँले प्राप्त गर्न नसक्ने कुनै पनि वस्तु छैन भन्ने उक्त शास्त्रवाक्यहरूको तात्पर्य हो। समस्त विश्वको नियमन (शासन) गर्ने परमात्माको दर्शन मिल्दाखेरि उहाँबाट आफूलाई समस्त मङ्गलहरू मिलुन् भनेर प्रार्थना गर्नुपर्नेमा तद्विरुद्धरूपमा उहाँलाई नै मङ्गलहरू मिलुन् भनेर आफूले आशासन गर्नु असङ्गत विषय हो भनेर केहीजनाले आक्षेप गर्न सक्छन्। तर भगवान्को अनुग्रहद्वारा परिपूर्ण भक्तिलाई प्राप्त गरेका महनीय महानुभावहरूले आफ्नो दृष्टिको गोचर बनेको भगवद्विग्रहको सौन्दर्य–सौकुमार्य आदिको भावना गर्दाखेरि भक्तिपारवश्य नामक तन्मयत्वद्वारा भगवान् रक्षक हुनुहुन्छ भन्ने विषयलाई भुलेर आफूलाई नै उहाँको

रक्षकको रूपमा भावना गरेर उहाँको सौन्दर्य–सौकुमार्य आदिमा कुनै ढङ्गले पनि अनर्थ नहुनेगरी मङ्गलाशासन कार्यमा उद्युक्त हुनु उचित नै हो। यस्मा असाङ्गत्य केही पनि छैन। उहाँ (भक्त) हरूमा भएको भक्ति, पूर्णरूपेण भगवत्सौन्दर्यको अनुभव गर्नको लागि कारण बन्नुपर्दछ। त्यो मोक्षको हेतु बन्नुपर्दछ। भगवान् रक्षक हुनुहुन्छ भन्ने यथार्थलाई विस्मरण गराउनको लागि यो कारण बन्दछ र? भनेर शङ्का गर्नुहुँदैन। प्रेमावेशद्वारा भगवान्को दर्शन गरेका अनेकन् महानुभावहरूले यसैगरी भुलेर प्रेमान्ध्यद्वारा भगवान्को मङ्गलाशासन गरेका अनेक उदाहरणहरू छन्। यो मङ्गलाशासन नामक व्यवहार शिष्टाचारसिद्ध नै हो। यस सन्दर्भमा यी निम्न उदाहरणहरूलाई ग्रहण गरौं।।

१. श्रीरामायणको अयोध्याकाण्डमा वाल्मीकिजीले यसरी बताउनुभएको छ–

**''स्त्रियो वृद्धास्तरुण्यश्च सायं प्रातस्समाहिताः।**
**सर्वान् देवान् नमस्यन्ति रामस्यार्थे यशस्विनः।।''**

ताटका–ताटकेय (सुबाहु) आदि राक्षसवधद्वारा र शिवधनुर्भङ्ग, परशुरामजीको गर्वभङ्ग आदिद्वारा श्रीरामजी परमपुरुष एवं देवाधिदेव हुनुहुन्छ भनेर जानेका सबै प्रजाहरूले, स्त्रीहरूले, वृद्धहरूले, युवक–युवतीहरूले र सम्पूर्ण अयोध्यावासीहरूले प्रतिदिन रामजीको क्षेमको लागि उभय सन्ध्याकालहरूमा तत्तत् देवालयहरूमा गएर हाम्रो रामजी कुशलपूर्वक रहनुहुनेछ भनेर प्रार्थना गर्दछन्। यो राम माथि प्रजाहरूको प्रेमान्ध्य हो।।

२. सीताजीसँग विवाह गरेर भगवान् राम सपरिवार अयोध्याको लागि फिर्ता हुँदै गरेको समयमा अहङ्कारको साथमा परशुरामजी अगाडि आउनुहुन्छ। त्यतिबेला दशरथजीले भयभीत भएर मेरा बालक कुमारहरूलाई अभयप्रदान गर्नु। कुनै प्रकारको अनर्थ नगर्नु, क्षमा गर्नु भनेर परशुरामजीको शरणागति गरेर मूर्च्छित हुनुभएछ। भगवान् श्रीरामले परशुरामजीमा भएको वैष्णवशक्तिलाई आकर्षण गरेर उहाँलाई निर्वीर्य बनाएर पठाइदिनुहुन्छ। त्यसपछि मूर्च्छामा रहेका दशरथजीलाई उठाएर केहीजनाले यो विजयवार्तालाई सुनाइदिन्छन्। त्यतिबेला दशरथजीले आफू र आफ्ना पुत्रहरूले पुनर्जन्म लिएजस्तो भावना गर्नुभयो। रामको पराक्रमलाई जानेर पनि पुत्रव्यामोहले गर्दा त्यो विषयलाई भुलेर दशरथजीले परशुरामजीसँग अभय माग्नुभयो।।

३. भगवान् रामको वनवास–प्रस्थानको समयमा कौसल्याजीले विश्वामित्रजीको यज्ञसंरक्षण आदि गरेका पुत्रको पराक्रम अप्रमेय छ भन्ने जानेर पनि पुत्रप्रेमले गर्दा त्यतिबेला अनेकप्रकारले मङ्गलाशासन गर्नुभएको छ। अमृतभाण्ड ल्याउनको लागि देवताहरूसँग युद्ध गर्नको निमित्त प्रस्थान गरेका गरुडजीलाई उहाँकी माता विनतादेवीले जुन मङ्गलवाक्यहरू बोल्नुभएकोथियो तिमीलाई पनि त्यस्तै मङ्गलहरू प्राप्त हुनेछन्। वनवासमा कुनै प्रकारका अनिष्टहरू नरहुन् भनेर आशीर्वाद दिनुभएको थियो।।

४. राक्षसहरूबाट आफूहरूलाई प्राप्त भएका बाधाहरू बताउँदै **''हजुर हाम्रो रक्षक बन्नुहोस्''** भनेर प्रार्थना गर्न आएका दण्डकारण्यवासी महर्षिहरूले, तत्काल उदाएको बालचन्द्रमाको जस्तो सौन्दर्यले युक्त भगवान् श्रीरामको दर्शन गरेर परवश बन्दै प्रभुको लागि मङ्गल प्राप्त होस् भनेर आशीर्वाद दिन प्रारम्भ गर्नुभयो। विज्ञानका निधि मानिने त्यस्ता मान्य महर्षिहरूले नै भगवान् नै रक्षक हुनुहुन्छ भन्ने तत्त्वलाई भुलेर मङ्गलाशासन गर्नथाल्नुभयो। त्यसको कारण, भगवत्सौन्दर्यद्वारा उहाँहरूलाई प्राप्त भएको पारवश्य नै हो॥

५. पछाडि बताइएका व्यक्तिहरूदेखि अत्यन्त विलक्षण कर्मसम्बन्धको लेश पनि नभएकी सर्वज्ञा भन्ने योग्य श्रीसीतादेवीले भगवत्प्रभावलाई सम्पूर्ण रूपमा जान्नुभएको थियो। श्रीदशरथजीको आह्वानद्वारा सभामण्डपमा जाँदै गर्नुभएका श्रीरामचन्द्रप्रभुको साथमा द्वारसम्म अनुवर्तन गरेर श्रीसीताजीले उहाँको मङ्गलाशासन गर्नुभयो। सबैजना दिक्पालहरूले हजुरलाई मङ्गल प्रदान गरून् भनेर प्रार्थना गर्नुभयो। यसरी श्रीजानकीजीले प्रार्थना गर्नुमा पनि भगवान् रामको विषयमा उहाँको अत्यन्त स्नेह नै कारण हो। यी सबै रामावतारका दृष्टान्त हुन्॥

अब श्रीकृष्णावतारमा—श्रीकृष्णपरमात्माले अवतार लिने बित्तिकै शङ्ख—चक्रादिविभूषित उहाँको दिव्यमङ्गलविग्रहको दर्शन गरेर उहाँ देवाधिदेव हुनुहुन्छ भन्ने जानेर पनि कंसबाट भगवान्

लाई के अनर्थ आइपर्ला? भन्ने शंका गरेर श्रीवसुदेवजीले यो दिव्यरूपलाई उपसंहार गर्नुहोस् भनेर भगवान्सँग प्रार्थना गर्नुभयो।।

यस्ता दृष्टान्तहरूको अनुसार परिशीलन गर्दा प्रेमावेशले (भगवत्प्रीतिको आधिक्यले) यथार्थज्ञानलाई भुलाइदिन्छ भन्ने विषय स्पष्ट हुन्छ। यो विषय केवल इतिहास–पुराणप्रसिद्ध मात्र नभएर लोकप्रसिद्ध पनि छ। अनेकौं व्रतहरूको आचरण गरेर भगवान्को वरप्रसादद्वारा प्राप्त गरेको आफ्नो पुत्र महाशक्तिसम्पन्न छ भनेर जान्दा पनि माता–पिताहरूले अनुक्षण उसलाई के अनर्थ होला? आपत्ति आउला? भनेर डराउने गर्दछन्। कुनै एक गरीब व्यक्तिले अनर्घ ठूलो रत्न आफूलाई मिल्दाखेरि त्यस रत्नलाई अत्यन्त जागरूकताको साथमा छिपाएर राख्दछ। हावाले थोरै पातहरू हल्लिएको आवाज आउँदा पनि कुनै व्यक्ति आएर यो रत्नको अपहरण गरिदिन्छ कि भनेर डराउने गर्दछ। त्यही भएर यसरी मन द्रवित भएर आफ्नो प्रीतिपात्र वस्तुलाई कुनै उपद्रव आइपर्छ कि भनेर आशङ्का गर्नु मानवको सहज धर्म हो।।

अचेतन सूर्यकान्त–चन्द्रकान्तमणिहरू सूर्य र चन्द्रमाको किरण–स्पर्शले आफ्ना सहजस्वभावदेखि च्युत हुने गर्दछन्। जब वास्तवस्थिति यस्तो छ भने ''**परंज्योति**'' भनेर शास्त्रहरूद्वारा प्रशंसित, तेजोराशिको रूपमा विराजमान परमात्माले नै आफ्नो

दिव्यमङ्गलविग्रहको साथमा साक्षात्कार प्रदान गर्दाखेरि अतिकोमलमनस्क श्रीपेरियाल्वार, (विष्णुचित्तसूरि) यस क्षुद्रप्रपञ्च (संसार) मा भगवान्‌लाई कुनै अनर्थ प्राप्त होला कि? भनेर व्याकुल हुनुमा आश्चर्य के छ र? अतिकठिन लोहको पिण्ड पनि अग्निसन्तापद्वारा कमलो बन्छ भने सुकुमार शरीर भएका मानवहरूको विषयमा बताउनु पर्दछ र? भन्ने दृष्टान्त देखाउनेवाला महाकवि कालिदासको यो निम्नाङ्कित सूक्ति यहाँ स्मरण गर्ने योग्य छ–

**''अभितप्तमयोऽपि मार्दवं भजते कैव कथा शरीरिषु''**

यो रघुवंशमहाकाव्यको सूक्ति हो।।

भगवद्दर्शनद्वारा हृदयमा भएको भक्ति, उद्वेलित भएर **''पल्लाण्डु''** नामक प्रबन्धको रूपमा श्रीविष्णुचित्त आल्वार्‌को मुखारविन्दबाट आविर्भाव (प्रकट) भयो भनेर हामीले अवगत गर्‍यौं। अनेक दृष्टान्तहरूद्वारा समाधान दिंदा पनि केही जना अरसिकहरूको हृदयबाट संशय निवृत्त नहुन पनि सक्छ। उनीहरूले आफ्नो मौढ्यभावद्वारा यसरी शङ्का गर्दछन्। स्वामी (परमात्मा) रक्षक, आफूहरू उहाँका दासका रूपमा रक्षालाई प्राप्तगर्ने रक्ष्यभूत हौं भन्ने यथार्थलाई जानेका यी आल्वार्‌ले आफै भगवान्‌को मङ्गलाशासन गरेर उहाँको रक्षणको व्यवस्था गरौं भनेर भावना गर्नु के विपरीतज्ञान होइन र? के यो दोष होइन र?

भन्ने आशंकाको, व्याख्याता श्रीकृष्ण पादसूरिले राम्रो समाधान दिनुभएको छ।।

पुण्य–पापादि कर्मसम्बन्धद्वारा प्राप्त भएको अज्ञान, दोषावह हुन्छ तर आश्चर्यपूर्ण भगवद्विषयको दर्शन गर्दाखेरि विस्मरण हुनुरूपी यो अज्ञान, विषयवैलक्षण्यप्रयुक्त भएको हुनाले दोष मानिंदैन। दीर्घरोगले गर्दा र वार्धक्य आदिको कारणले गर्दा विस्मरण हुनु दोष हो। तर भगवत्स्वरूपको ध्यान गर्दा र प्रत्यक्ष दर्शन गर्दा आश्चर्यवश भएर केही भुल्नु गुण नै हो दोष होइन। त्यस्ता परिणामहरू यदि उस व्यक्तिमा हुँदैनन् भने त्यस्तो व्यक्ति पाषाणहृदयवाला नै हो भनेर सहृदय महानुभावहरूले उसलाई निरसन गर्नुहुन्छ।।

अथवा, भगवान्‌द्वारा रक्षणलाई प्राप्त गर्ने दासहरूले उहाँको मङ्गलाशासन गर्नु दोष हुँदै होइन। ईश्वरमा भएको स्वामित्व र आफूमा रहेको शेषत्व (ईश्वरको लागि नै आफू काममा आउने आफ्नो स्वरूप) लाई राम्रोसँग जानेको दासले आफ्नो स्वामीको समस्त वैभव बढ्नेगरी अतिशयको आकांक्षा गर्नु आफ्नो स्वरूपको अनुरूप वृत्ति भएकोहुनाले आफ्नो योगक्षेमलाई पनि छोडेर आफ्नो स्वामीको कैङ्कर्य गर्दै प्रभुको चिरकालसम्म अभिवृद्धि होस् भनेर नित्य भावना गर्नु आवश्यक छ भन्ने विषय श्रीविष्णुचित्त–आल्वार्‌द्वारा विरचित ''''तिरुप्पल्लाण्डु'' प्रबन्धद्वारा निरूपण गरिएको छ।।

यस प्रबन्धको प्रारम्भका दुई पाशुर (गाथा) हरूमा आकाशमा आएर सपरिवार दर्शन दिने भगवान्को लागि श्रीआल्वार्ले आफै मङ्गलाशासन गर्नुभएको छ। त्यतिले मात्र आफ्नो मनमा तृप्ति नभएर माथिका अरू तीन गाथाहरूद्वारा शरणागतिनिष्ठ प्रपन्नहरूलाई र **'केवल'** नाम गरिएका आत्मानुभवनिष्ठ भक्तहरूलाई, साथै लौकिक ऐश्वर्यादि फलहरूको अपेक्षा राख्ने भक्तहरूलाई पनि बोलाएर स्वामी (भगवान्) को मंगलाशासन गर्नु भनेर आदेश गर्नुभएको छ। उहाँले बोलाए अनुसार ती तीनै जना अधिकारीहरू अलग अलग आएर श्रीआल्वार्सँग सम्मिलित भएको कुरा माथिका अरू तीन गाथाहरूमा बताइएको छ। त्यसैगरी ती तीनप्रकारका अधिकारीहरूले श्रीआल्वार्सँग मिलेर भगवान्को मङ्गलाशासन गरेको विषय अगाडिका अरू तीन गाथाहरूमा निरूपण गरिएको छ। यसरी मङ्गलाशासन गर्ने व्यक्तिहरूको लागि भगवदनुग्रहद्वारा नित्यसूरिहरूकै समान स्थिति प्राप्त हुन्छ र भगवत्सन्निधानमा नित्य मङ्गलाशासन गर्ने योग्यता मिल्दछ भनेर अन्तिम पाशुरमा फलश्रुति बताइएको छ। यो सङ्ग्रहरूपमा १२ गाथाले युक्त यस प्रबन्धमा बताइएको सारांश हो।।

**अवतारिका समाप्त भयो**



श्रीनाथमुनिद्वारा अनुगृहीत

## श्रीविष्णुचित्त आल्वार्को स्तुतिपद्य

गुरुमुखमनधीत्य प्राह वेदानशेषान्
नरपतिपरिक्लृप्तं शुल्कमादातुकामः।
श्वशुरममरवन्द्यं रङ्गनाथस्य साक्षात्
द्विजकुलतिलकं तं विष्णुचित्तं नमामि।।

**भावार्थ** – गुरुहरूको सन्निधिमा वेदविद्याको अध्ययन नै नगरीकन जुन भक्ताग्रेसरले, पाण्ड्यदेशका राजा वल्लभदेवको महासभामा गएर समस्त वेदप्रमाणहरूको प्रतिपादन गरेर श्रीमन्नारायण नै परतत्त्व हुनुहुन्छ भन्ने विषयलाई प्रतिष्ठित गरेर ती राजाद्वारा समर्पित धनको राशिलाई सम्मानको रूपमा स्वीकार गर्नुभएको थियो, त्यस्ता ब्राह्मणोत्तम, श्रीरङ्गनाथ भगवान् लाई आफ्नी पुत्री गोदादेवीलाई कन्यादानको रूपमा समर्पण गरेर भगवान्को श्वशुरको रूपमा सुप्रसिद्ध बन्नुभएका र देवताहरूद्वारा पनि पूजनीय ''**श्रीविष्णुचित्त**'' नामक पेरियाल्वार्लाई प्रणाम गर्दछु।।

–O–

अब मङ्गलाशासनपरक ''**तिरुप्पल्लाण्डु**'' प्रबन्धको प्रारम्भमा रहेका दुई गाथाहरूलाई विस्तृत विवरणको साथमा आस्वादन गर्ने प्रयत्न गरौं।।

निरतिशयसौन्दर्य—सौकुमार्यादिले युक्त दिव्यमङ्गलविग्रहको साथमा सर्वेश्वरले दर्शन दिंदाखेरि यी विष्णुचित्त आल्वारले, दुष्ट कालको प्रभावद्वारा अनेक परिणामहरूको लागि अवकाश भएको यस नास्तिक प्रपञ्चमा भगवान्को यस्तो सुकुमार दिव्यमङ्गलविग्रहकोलागि कुनै पनि व्यक्तिवाट अनर्थ सम्भव हुन सक्छ भन्ने आवेदनाको साथमा अनादि एवम् अनन्त भनेर बताइएको काल रहँदासम्म— अर्थात् चिरकालतक भगवद्विग्रहको सौन्दर्यमा कसैको पनि कुनै प्रकारको दृष्टि नलागोस्। उहाँकोलागि नित्य क्षेम बनिरहोस् भनेर पहिलो गाथामा मङ्गलाशासनको प्रारम्भ गर्नुभएको छ।।

मूल -

पल्लाण्डु पल्लाण्डु पल्लायिरत्ताण्डु
पलकोटि नूरायिरम्।
मल्लाण्ड तिण्डोल् मणिवण्णा!
उन् शेवडि शेव्वि तिरुक्काप्पु।।१।।

प्रतिपदार्थ -

मल् आण्ड = चाणूरआदि मल्ल योद्धाहरूलाई परास्त गर्ने

तिण् तोल् = दृढभुजावाला!

मणिवण्णा! = इन्द्रनीलमणिजस्तो देहकान्तिले युक्त! (हे भगवन्!)

उन् शेव्वडि = हजुरका लालिमाले युक्त श्रीचरणहरूको

**शेव्वि** = सौन्दर्यको लागि

**तिरुक्काप्पु** = परिपूर्ण रक्षा होस्

**पल् आण्डु पल् आण्डु** = अनेक अनेक वर्ष

**पल् आयिरत्ताण्डु** = अनेक हजार वर्ष

**पल कोटि नूरायिरम्** = अनेकौं करोड सयवर्षसम्म

(हजुरको मङ्गल होस्।।)

**विवरण – पल् आण्डु**– भन्ने पदको अनेक संवत्सर भन्ने अर्थ हुन्छ। अखण्डरूप कालको विभागलाई बताउने पदहरू निमेष (मिनेट) घण्टा, दिन, महिना, युग, कल्प आदि अनेक छन् र पनि ''**आण्डु**'' भनेर संवत्सरवाचक पदलाई यहाँ प्रयोग गरेर यस्ता संवत्सरहरूलाई हजार–करोडको रूपमा बढाँउदै गएर मङ्गल बताउनमा यहाँ (आल्वार्) को अभिप्राय के हो? भन्ने सन्देह उत्पन्न हुन सक्छ। आल्वार् भगवान्लाई अनन्त आयुष्य मिलोस् भनेर प्रार्थना गर्ने अभिप्राययुक्त भएको हुनाले आयुष्यबोधनको सन्निहित ''**आण्डु**'' भन्ने संवत्सरवाचक पदलाई नै उहाँले यहाँ उचितरूपमा प्रयोग गर्नुभएको हो। पञ्चवटी आश्रममा सीताजी नदेखिएपछि दु:खावेशको साथमा उहाँलाई खोज्दै आउनुभएका श्रीराम भगवान्को दर्शन पाउनासाथ रावणद्वारा पक्षच्छेद भएर (पखेटा काटिएर) प्राणावशेष स्थितिमा रहेका जटायुले ''**आयुष्मन्!**'' भनेर उहाँलाई सम्बोधन गर्दै ''हजुरको मंगल होस्'' भनेर मङ्गलाशासन गर्नुभएको थियो।

सीतावियोगजन्य दुःखद्वारा भगवान्‌लाई कुनै अनर्थ हुन्छ कि? भन्ने मनोवेदनालाई प्राप्त गरेका जटायुले आफ्नो अवस्थालाई पनि गणना नगरेर भगवान्‌लाई नै ''**आयुष्मन्!**'' भनेर आशीर्वाद दिनु अत्यन्तै विशिष्ट विषय हो।।

''**वेदनूल् पिरायं नूरु**'' भनेर तिरुमालै नामक दिव्यप्रबन्धमा विप्रनारायण नामले युक्त श्रीभक्ताङ्घ्रिरेणु आल्वार्‌ले एउटा गाथामा बताउनुभएको छ। वेदमा निर्देश गरे अनुसार, सय वर्ष मनुष्यको जीवन हो भन्ने उक्त तमिलवाक्यको अर्थ हो। त्यस गाथामा आयुष्यवाचक पदको पर्यायको रूपमा ''**पिरायम्**'' भन्ने संवत्सरवाचक पदको प्रयोग ध्यान दिने योग्य छ। त्यही भएर **पल् आण्डु** = भन्ने पदको अनन्त आयुष्य प्राप्त होस् भनेर प्रार्थना गर्नुमा तात्पर्य हो। **पल्** = भन्ने पद बहुवचनार्थक भएको हुनाले यत्ति भन्ने संख्यापरिमिति नभएको अनन्तकालसम्म भगवान्‌को यो सौन्दर्य, प्रकाशमान रहोस् भन्ने ''**पल्लाण्डु**'' पदको सारांश हो।।

एकप्रकारले ''**पल्लाण्डु**'' भन्ने पद नै, प्रयोग गर्नेवाला व्यक्तिको स्वरूपको सूचक हो। कुनै एकजना महनीय महापुरुषको दर्शन गर्नेवाला सामान्य मानवले, उहाँको प्रति ''**शुभ (मङ्गल) होस्**'' भनेर प्रयोग गर्ने शब्दजस्तै नै हो यो ''**पल्लाण्डु**'' भन्ने पद। यसबाट, प्रयोग गर्ने व्यक्तिको अल्पत्व र सम्बोधन गरिनेवाला व्यक्तिको उत्कर्ष सूचित हुन्छ। सर्वेश्वरको अनवधिकातिशयत्व

र स्वामित्वलाई, साथै चरमावधि भन्ने योग्य आफ्नो शेषत्वलाई पनि सहजस्वरूप हो भनेर श्रीविष्णुचित्त आल्वार्ले जान्नुभएको थियो। आफ्नो र परमात्माको सहजस्वरूपलाई आविष्कार गर्नको लागि उहाँले ''**पल्लाण्डु**'' भनेर मङ्गलाशासन प्रारम्भ गर्नुभएको छ। ऋग्वेदमा भगवान्को स्तुति गर्दाखेरि ''**जितन्ते पुण्डरीकाक्ष!**'' इत्यादिवाक्यहरूमा प्रयोग गरिएको ''**जितम्**'' भन्ने पद, अष्टाक्षरी मन्त्र आदिमा ''**नमः**'' भन्ने पद, '**तोत्तोम्**' भनेर तमिलभाषामा आल्वार्हरूले प्रयोग गरेको पद, साथै ''**पोत्ति**'' भनेर गोदाम्बाजीले प्रयोग गरेको पद र प्रकृतमा यो ''**पल्लाण्डु**'' भन्ने पद यी सबै एकै कोटिका पर्यायपदहरू हुन्।।

यी सबै पदहरू भगवान्को स्वामित्व र आफ्नो (जीवको) दास्यलाई सूचित गर्नकोलागि प्रयोग गरिएका छन्। यी पदहरूमा प्रकृति–प्रत्ययविभाग अनुसार थोरै अर्थभेद भएता पनि समग्ररूपमा हेर्दा रूढिकै पद्धतिमा यी शब्दहरू आत्मा र परमात्माको स्वरूपलाई आविष्कार गर्नमा पर्यवसन्न (परिणत) हुन्छन्। अतः यी सबै पर्यायपद हुन् भन्नमा कुनै आपत्ति छैन। कसरी त भन्दा?– १. '**जितम्**' भन्ने पद, '**जि**' भन्ने क्रियामाथि 'त' भन्ने प्रत्यय मिलाउँदा सिद्ध हुन्छ। यो पदले, जयशील भन्ने अर्थलाई बोध गराँउदै उस व्यक्तिको महत्त्वलाई र प्रयोग गर्ने व्यक्तिको दुरभिमानराहित्यलाई पनि देखाउँदै अहङ्कार दबेर म हजुरको दास बन्नेगरी हजुरले मलाई वशीकार गर्नुभयो भन्ने

अर्थलाई सूचित गर्दछ। यसरी यो पदले, भगवान् (स्वामी) को परत्वलाई र परतन्त्रतारूप आफ्नो दास्यस्वरूपलाई निरूपण गर्दछ।।

२. अब ''**नमः**'' भन्ने पद ''**न + मः**'' भनेर दुई अक्षरको रूपमा विभाजन गरिएको छ। यसले म मेरो रक्षक होइन भन्ने अर्थलाई बताउँदै आफूमा पहिला रहेको स्वातन्त्र्यभ्रम निवृत्त भयो भन्ने विषयलाई सूचित गर्दछ। यसरी यो पदले पनि शेषत्व नै जीवको स्वरूप हो, स्वामित्व नै ईश्वरको स्वरूप हो भन्ने विषयलाई प्रकट गर्दछ।।

३. ''**तोत्तोम्**'' भन्ने द्राविडभाषाको (आल्वार्हरूद्वारा प्रयुक्त) पदले, परास्त भयौं भन्ने अर्थलाई बोध गराउँदै आफ्नो स्वामीको विजयलाई प्रकट गर्नु नै शेषभूतको प्रधान उद्देश्य हो भन्ने विषयलाई निरूपण गर्दछ। यसरी यो पदले पनि आफ्नो अहङ्कारनिवृत्तिलाई बोध गराउँदै शेषत्वस्वरूपलाई स्पष्ट गर्दछ।।

४. '**पोत्ति**' भन्ने तमिलपद पनि मङ्गल होस् भन्ने अर्थको वाचक हो। आफ्नोलागि फलको अपेक्षा नराखीकन आफ्नो स्वामीको अभिवृद्धि नै आफ्नो प्रयोजन हो भन्ने भावनाविशेषलाई उक्त पदले सूचित गर्दछ। यो उत्तम सेवकको स्वरूप हो।।

५. यसैगरी ''**पल्लाण्डु**'' भन्ने पदले पनि आफ्नो स्वामीको अतिशय (गौरव) को अभिलाषा राखेर नित्य मङ्गल गाउने आफ्नो सहज स्वरूपलाई बताउँदछ भनेर पछाडि नै निरूपण

गरेका थियौं। समग्ररूपमा परिशीलन गरेर हेर्दा—यी पदहरूमा अवान्तर अर्थभेदहरू छन् र पनि सबै पदहरू आत्मस्वरूप मानिने दास्यका नै निरूपक भएका हुनाले पर्यायपदको रूपमा नै सबै पदहरूलाई ग्रहण गर्न सकिन्छ।।

यहाँ तमिलपाशुर (गाथा) मा दुईपल्ट **'पल्लाण्डु'** भन्ने पद आवृत्त भएको छ। एकपल्ट भन्दाखेरि अगाडि भएको व्यक्तिलाई बोध भएन भने एकपल्ट प्रयोग गरेको पदलाई पुनः प्रयोग गरिन्छ। सहजरूपमै सर्वज्ञ परमात्माले तदेकदीक्षाको साथमा रहेर अहङ्कारग्रस्त यो जीवराशिलाई वशीकार गर्नको निमित्त अनेकौं उपायहरू अपनाउनुहुन्छ। सावधानीको साथमा हामीहरूको दास्य (सेवा) लाई स्वीकार गर्नको लागि प्रतीक्षा गरेर रहनुहुन्छ। त्यस्तो स्थिति हुँदा पनि दुई पल्ट **'पल्लाण्डु'** (अनेकवर्ष मङ्गल) पदलाई बताउनुपर्दछ र? यो पुनरुक्तिको प्रयोजन के हो? भन्ने संशय हुन सक्छ। भगवान्ले एकैपल्टमा मम्झनुहुन्न कि? भन्ने शङ्का गरेर यो पुनरुक्तिको प्रयोग गरिएको होइन। भगवान्ले एकै पल्टमा स्मरण गर्नुहुन्छ र पनि आदरातिशयले गर्दा त्यसै रहन नसकेर आफ्नो स्वरूपलाई आविष्कार गर्नको निमित्त यसरी उच्चारण गरिएको हो। धेरै तृषार्त भएको (तिर्खाएको) व्यक्तिले अर्को व्यक्तिले, पिउने पानी आफूलाई ल्याएर नदिंदासम्म **''पानी, पानी''** भनेर जसरी

अनेक पल्ट आफ्नो पिपासालाई प्रकट गर्दछ त्यसैगरी श्रीविष्णुचित्तसूरिले पनि आफ्नो मनमा भएको भय, निवृत्त नहुँदासम्म अत्यन्त आर्तिको साथमा **''पल्लाण्डु पल्लाण्डु''** भनेर अनेकपल्ट गाउनुहुन्छ।।

**(पल्लायिरत्ताण्डु)** अनेकहजार वर्ष भन्ने–उक्त पदको अर्थ हो। पछाडि बताइएको **'पल्'** भन्ने बहुवचनद्वारा नै गणना गर्न नसकिने सम्वत्सरहरू भन्ने अर्थ मिलिसकेको छ। पुन: यो पद किन प्रयोग गरेको हो? बहुवचनद्वारा नै सम्वत्सरहरू भन्ने अर्थ सिद्ध हुन्छ त? भन्ने सन्देह उत्पन्न हुन सक्छ। त्यसको समाधान के हो त भन्दा? सहजरूपमै आकाशजस्तै, काल पनि अखण्ड हो। त्यसमा क्षण–निमेष–घण्टा–दिन–सम्वत्सर आदि भेदहरूको कल्पना गरिएको छ। यसै भेदकल्पनालाई परिच्छेद भन्दछन्। सूर्यसञ्चार आदि, कालको परिच्छेदमा कारण बन्दछन्। परिच्छेदक ती सूर्यपरिस्पन्दादिको **'यति'** भन्ने संख्यापरिमिति नभएको हुनाले (असंख्याक भएको हुनाले) ती परिस्पन्द (सञ्चलन) आदिको अनुसार परिच्छिन्न गरिएका क्षण निमेष–घण्टा–मास (महिना) आदि को पनि संख्या छैन भन्ने विषय स्पष्ट हुन्छ। अत: यी सबै पनि असंख्याक छन्। दिन–रात–महिना भन्ने विभागको लागि सूर्य–चन्द्रादिको परिस्पन्द कारण बनेर यति घण्टाको एक दिन, यति दिनको एक महिना इत्यादिरूपमा निर्णय गरिन्छ। त्यसैगरी मानवको समयको परिमाणको एकवर्ष

समय, देवताहरूको एक दिनको रूपमा परिगणित हुन्छ। यी देवताहरूको परिमाणमा उनीहरूको अनेक हजार वर्ष, ब्रह्माजीको एकदिन हुन्छ। यसरी अखण्ड कालको परिच्छेदकहरू असंख्याक भएका हुनाले उनीहरूद्वारा परिच्छेद गरिने मास–सम्वत्सरादिहरू पनि तत्तत्परिमाण अनुसार असंख्याक नै हुन्छन्। यसरी परामर्श गरेर हेर्दाखेरि मानवको कालको परिमाण अनुसार सैकडौं वर्ष र देवताहरूको परिमाण अनुसार केही हजार संवत्सर, साथै ब्रह्माजीको परिमाण अनुसार केही करोडवर्षको गणना बन्दछ। यी सबै कुराहरूलाई दृष्टिमा राखेर **(आयिरत्ताण्डु)** हजारौं वर्ष **(कोटि नूरायिरम्)** केही करोडसय वर्ष भनेर क्रमैले कालपरिमाणलाई बढाएर बताएको हुनाले अनाद्यन्त यो पूरै कालमा परमात्माको नित्य नै मङ्गल होस् भनेर बताउनु नै यो पाशुरको उद्देश्य हो।।

एक ब्रह्माजीको आयु:परिमाण नै अनेकन् सय करोड संवत्सरको छ भने अनन्तब्रह्माण्डहरूमा ती ब्रह्माहरूको संख्या पनि अनन्त छ। ती ब्रह्माहरूको पनि संख्यापरिमिति छैन भन्ने विषय स्पष्ट हुन्छ। निरन्तररूपमा–यो काल रहँदा सम्म अर्थात् सधैं भगवान्को मङ्गल होस् भनेर श्रीविष्णुचित्तसूरिले मङ्गलाशासन गर्दैहुनुहुन्छ। कालको परिणामको लागि नितराम् अवकाशै नभएको **'नित्यविभूति'** नामक श्रीवैकुण्ठमा रहने अनन्त–गरुड–विष्वक्सेन आदिले पनि भगवान्को दिव्य सौन्दर्य–सौकुमार्य आदिको दर्शन गरेर परवश हुँदै प्रभुलाई कुनै अनिष्ट हुन्छ कि?

भन्ने अस्थानभयशङ्काले गर्दा उहाँको मङ्गलाशासन गर्नुहुन्छ। यस प्रकृतिमण्डलमा त अनेक अनिष्टहरू संभव हुने अवकाश छ। त्यही भएर **भयावेशको** कारणले गर्दा कालतत्त्व रहँदासम्म परमात्माको **मङ्गल होस्** भनेर श्रीआल्वार्ले प्रतिपादन गर्नुमा आश्चर्य के छ र?।।

यसरी यहाँ (आल्वार्) ले भयावेशद्वारा "**पल्लाण्डु पल्लाण्डु**" भनेर निरन्तर मङ्गलाशासन गर्दाखेरि भगवान्ले, दर्शन दिएर उहाँको भयनिवारण गर्नकालागि पूर्वकालमा चाणूर–मुष्टिकहरूसँग युद्ध गरेर उनीहरूलाई परास्त गरेका आफ्ना भुजाहरूको दर्शन गराउनुहुन्छ। यस्तो भुजपराक्रम भएको मलाई कसले अनिष्ट गर्न सक्दछ र? हजुरले डराउनुपर्ने आवश्यकता छैन। सिंहले शयन गरेको गुफामा अथवा झाडीमा अर्को जन्तु आएर के उसलाई हिंसा गर्न सक्छ र? भनेर सम्झाउँदै श्रीविष्णुचित्तसूरिको आर्तिलाई शान्त गर्नको लागि भगवान्ले प्रयत्न गर्नुभयो।।

विभीषणजी शरणागत बन्दाखेरि "यो रावणको भाइ हो" यसलाई अगाडि लगाएर रावणले मायोपायद्वारा हाम्रो अनर्थ गर्न सक्छ भनेर सुग्रीवले शङ्का गर्दा उनको भयलाई शान्त गर्नको निमित्त भगवान् श्रीरामचन्द्रले "**पिशाचान् दानवान् यक्षान्**" भन्ने श्लोकद्वारा आफ्नो पराक्रमलाई घोषणा गरेर बताउनुभएको थियो र त्यतिबेला सुग्रीवको सन्देह निवृत्त भएको थियो।।

सन्दर्भ आएकोहुनाले त्यो श्लोकको व्याख्यालाई पनि आस्वादन गरौं।।

**''पिशाचान् दानवान् यक्षान् पृथिव्यांचैव राक्षसान्।**
**अङ्गुल्यग्रेण तान् हन्यामिच्छन् हरिगणेश्वर!।।''**

यहाँ–पिशाच, दानव, यक्ष, राक्षस भन्ने पदहरूले हिंसाप्रवृत्तिमा एकभन्दा एक उत्तरोत्तर अधिक छन् भन्ने अर्थलाई बोध गराउँदछ। चोरहरूमा साना र ठूला भन्ने हुन्छन्। केही जनाले घर–घरमा चोरी गर्दछन् भने अरू केहीजनाले पूरै गाँउमा उपद्रव मच्चाउने गर्दछन्। त्यस्तैगरी राक्षसजातिमा पनि पिशाच– दानवादि भेदहरू छन्। केवल लङ्कानगरमा मात्र नभएर पञ्चाशत्कोटिविस्तीर्ण भूमण्डलमा रहेका सबै राक्षसहरू अगाडि आए पनि सबैजनालाई अनायासरूपमा मैले परास्त गर्न सक्छु। त्यसको लागि मलाई अस्त्र–शस्त्रादि कुनै पनि उपकरणहरूको आवश्यकता छैन। क्रिमि–क्रीटादिहरूलाई गोडाको औंलाले मिचेझैं सुलभरूपमै उनीहरूलाई मैले परास्त गर्न सक्छु। (यो भगवान् रामको वचन हो) त्यसो हो भने हाम्रो प्रबलशत्रु रावणलाई हजुरले किन विनाश गर्नुभएनत? भनेर प्रश्न गर्न मिल्छ। **(इच्छन्)** अहिलेसम्म मलाई त्यस्तो सङ्कल्प उत्पन्न नभएकोहुनाले मैले त्यो काम गरिन तर नसकेर होइन। रावण अथवा कुम्भकर्ण साथै यी राक्षसनायकहरू बुद्धि बदलिएर प्राणको साथमा आएर शिर झुकाउँछन् कि? यस्तो अवसर

हुँदाहुँदै व्यर्थमा उनीहरूलाई किन वध गर्ने भनेर दयागुणले गर्दा उपेक्षा गरेको थिएँ। भगवान् रामको यो वाक्यलाई सुनेपछि सुग्रीवको मनमा रहेको सन्देह निवृत्त भयो। यस्तो ढङ्गले विभीषणजीलाई पनि अभयप्रदान गर्नुभयो भन्ने कीर्ति भगवान् श्रीरामचन्द्रलाई प्राप्त भयो।।

त्यसैगरी यी विष्णुचित्त आल्वार्को मनमा भएको भय पनि निवृत्त हुने छ भन्ने भावना गरेर भगवान्ले आफ्नो भुजपराक्रमलाई देखाउनुभयो। तर उहाँको भय दूर हुन त टाढै जाओस् यो भुजसौन्दर्यमाथि दुष्टहरूबाट के अनिष्ट होला? भन्ने मानेर अरू धेरै भय उहाँलाई बढ्दै गयो। महावीर आफ्नो पुत्र युद्धमा जाने बेलामा जन्म दिनेवाली आमाले, यो छोरो अतिसाहसको साथमा प्राणको पनि बाज़ी लगाएर युद्धरङ्गमा प्रवेश गर्छकि? अनेक माया (छल–कपट) ले युक्त युद्धमा कुनै अनर्थ हुने पो होकि? भनेर जसरी सन्देह गर्दछिन् त्यसैगरी आल्वार्ले पनि भयभीत भएर भगवान्को मङ्गलाशासन गर्नुहुन्छ। धेरै पहिला श्रीकृष्णावतारमा चाणूर र मुष्टिकलाई भगवान्ले परास्त गरेको विषयलाई यतिबेला बताउनुपर्ने आवश्यकता किन प-यो त? भन्दा–कुनै एक समयमा कुण्डलहरू धारण गरेर दर्शन दिएको कुनै एक विशिष्ट व्यक्तिलाई अर्को समयमा विना कुण्डलकै देख्दा पनि यो व्यक्तिका कुण्डल धारण गरेका

कानहरू हुन् भनेर जान्न सकिन्छ। त्यस्तैगरी यी आल्वार्ले पनि भगवान्का भुजाहरूलाई दर्शन गर्दा, उतिवेला मल्लहरूसँग भएको घोर युद्ध, उहाँलाई स्मरण भएर आउँछ। त्यही भएर भयकम्पित हृदयको साथमा उहाँले भगवान्को मङ्गलाशासन गर्नुहुन्छ।।

**(मणिवण्णा!)** हे इन्द्रनीलमणिजस्तो नीलवर्णवाला परमात्मन्! भन्ने यो सम्बोधन हो। देहकान्तिलाई ग्रहण गर्दा इन्द्रनीलमाणिक्यसँग साम्यलाई ग्रहण गर्न सकिन्छ। केवल कान्तिले मात्र नभएर सौलभ्य नामक स्वभाव अनुसार पनि मणिसँग भगवान्को साम्य बताउन सकिन्छ। त्यो रत्न आफ्नो स्वामीको लागि वस्त्रको छेउमा गाँठो पार्नको लागि र बाकसमा लुकाएर राख्नको लागि पनि सुलभ भएर रहन्छ। अर्थात् उसको अधीनमा रहन्छ। परमात्मा पनि रत्नजस्तै, भक्तहरूको अधीनमा बनेर यथेष्ट विनियोग गर्नको लागि सुलभ बनेर रहनुहुन्छ भन्ने भाव हो। यसरी मणिझैं मनोहर कान्तिले युक्त सुकुमार परमात्माको श्रीविग्रहमा कठोर स्वभाववाला मल्लहरूबाट कुनै अनिष्ट हुने हो कि? भनेर यी आल्वार्को मनमा उत्पन्न भएको भयावेश नै यसरी मङ्गलाशासनको कारण बन्यो। बालकृष्ण भगवान्को मल्लयोद्धाहरूसँग युद्ध आरम्भ भएको समयमा मथुरानगरमा रहेका सबै नारीहरूले यो युद्ध योग्य (उचित) छैन भनेर आवेदनाको साथमा यसरी निम्नढङ्गले बताएका थिएरे।।

"क्व यौवनोन्मुखीभूत—सुकुमारतनुर्हरिः।
क्व वज्रकठिनाभोगशरीरोऽयं महासुरः॥"

यो विष्णुपुराणको श्लोक हो। नौनीको भोग लगाएर सुकुमारढंगले बढेका सुन्दर शरीरवाला यी बालकृष्णजी कहाँ? वज्रजस्तो अतिकठिन महाशरीरले युक्त चाणूर नामक यो राक्षस कहाँ? यी दुईजनाको बीचमा युद्धको तयारी गर्नु ठीक होइन भनेर चारैतिर भएका मथुरावास्तव्यस्त्रीहरूले आक्रोश गरेका थिए॥

भगवान्‌को सौन्दर्यले र सौकुमार्यले गर्दा अर्थात् भगवत्सौन्दर्यमा कसैको पनि दृष्टिदोष नलागोस् भन्ने भावनाले भयाक्रान्त बन्नको लागि अवकाश छ तर भगवान् रत्न जस्तो सुलभ हुनुहुन्छ भनेर बताइएको सौलभ्य पनि कुनै अनिष्ट को कारण बन्दछ र? भनेर आशङ्का गर्न सकिन्छ। आफ्ना भक्त देवताहरू आफ्नो सन्निधानमा आएर जुनबेला (उनीहरूले) शरणागति गर्दाखेरि पनि उनीहरूको आपत्तिलाई निवारण गर्नकोलागि अगाडि सरेर राक्षसहरूसँग युद्धमा उत्रिनु भन्ने विषय त भगवान्‌को अनुभवमा बानी नै बन्दै आएको छ। कदाचित् त्यही बानी (स्वभाव) नै साहसको साथमा राक्षसवर्गमा युद्ध को निमित्त प्रवेश गर्नको लागि पनि कारण बन्न सक्ने भएको हुनाले भयभीत हुनमा यहाँ अवकाश छ॥

भक्तरक्षणको लागि अगाडि उत्रिनुपर्छ भन्ने संकल्पले ममा

रहेको सौलभ्य र पराक्रमलाई देखेर हजुर (श्रीविष्णुचित्तसूरि) यसरी डराउँदैहुनुहुन्छ? यो हजुरको मनमा भएको मार्दवगुणको निदर्शन हो। मलाई कुनै प्रकारको अनर्थले स्पर्श गर्दैन भनेर भगवान्‌ले सम्झाउँदा, फेरि यहाँ (आल्वार्) ले **(उन् शेवडि शेव्वि तिरुक्काप्पु)** भनेर समाधान दिँदैहुनुहुन्छ। रातो हजुरको श्रीपादपद्मको अतिसुकुमार कान्तिको दर्शन गर्दा मलाई भय हुँदै छ। त्यसमा मेरो मृदुहृदय कारण होइन। हजुरको श्रीविग्रहको सुकुमारच्छायालाई हजुरले पनि ऐनामा हेर्नुहुन्थ्यो भने सर्वज्ञ हजुर नै युद्ध आदिमा यो श्रीविग्रहलाई कुनै आपत्ति उपस्थित हुन्छ कि भनेर व्याकुलता प्राप्त गर्नुहुने थियो।।

**(शेव्वडि)** भन्ने पदको रातो कान्ति भन्ने एक अर्थ हो। वञ्चना नहुनेगरी सबैद्वारा आश्रय लिन सकिने श्रीचरण भन्ने पनि अर्थ हुन्छ। कान्तिविशेषद्वारा यी चरणहरू सम्पूर्ण श्रीविग्रहकै शोभाहेतु बनेका छन्। एक शिशुको लागि आफ्नो माताको स्तन नै प्राप्य भएझैं भक्तहरूकालागि भगवान्‌का श्रीचरणहरू नै आश्रयणीयस्थान हुन्। अर्घ्यपाद्यादि कैङ्कर्यहरू समर्पण गर्ने स्थान पनि भगवान्‌का श्रीचरणारविन्द नै हुन्। नित्य उज्ज्वलरूपमा रहने यो भगवत्पादकान्तिको लागि सम्पूर्णरूपमा मङ्गल होस् भन्ने विषयलाई (तिरुक्काप्पु) भन्ने पदले सूचित गर्दछ। आकस्मिकरूपमा उपस्थित भएका अनर्थहरू दूर हुनकालागि र यो भन्दा पहिला प्राप्त नभएको शुभपरम्परा

निरन्तररूपमा प्राप्त हुनको लागि यो मङ्गलाशासन नै रक्षणकवच हो भन्ने भाव हो।।

यस पाशुरमा वाक्यपरिसमाप्तिलाई सूचित गर्नेवाला कुनै क्रियापद छैन। त्यस क्रियापदको प्रयोग नगर्नुमा कारण के हो? भनेर केहीजनालाई सन्देह हुन सक्छ। ठीक हो। (अस्तु) मङ्गल होस्! भन्ने क्रियापद हुनैपर्ने हो। आफूभन्दा साना व्यक्तिहरूप्रति ठूला व्यक्तिहरूले मङ्गलाशासन गर्दाखेरि तिम्रो शुभ हुनेछ भनेर अनुग्रहसूचकको रूपमा आशीर्वाद दिनेगर्नुहुन्छ। आफ्ना बराबर व्यक्तिहरूको विषयमा र आफूभन्दा केही उन्नतस्थितिमा रहेका व्यक्तिहरूको विषयमा "तपाईंको लागि शुभ मिलोस् भनेर प्रार्थना गर्दछौं" भनेर बताउने गरिन्छ। तर सर्वाधिक परमात्माको वैभव र साथै चरमावधिमा रहेको आफ्नो अल्पत्व (नैच्य) को भावना गर्दाखेरि त्यस्तो परमात्माको लागि मङ्गल बताउनको लागि ममा के योग्यता छ र? भन्ने आवेदना आल्वार्मा उपस्थित हुन्छ र विना क्रियापदकै यो वाक्य समाप्त हुन्छ। यसरी कतिपय सन्दर्भहरूमा भावावेशद्वारा, बताउनखोजेको कुरालाई पूरै बताउन नसकेर रोकिनु सहज नै हो। त्यो दोष होइन।।

एकजना महर्षिले बाल्यकालदेखि आफ्नो आश्रममा नै घुमिराखेकी पालितपुत्रिकालाई विवाह गरिदिएर पतिको सन्निधानमा पठाउनुभयो। त्यो समयमा ती बालिका (शकुन्तला) ले आफूले

सानैदेखि पालन—पोषण गरेर रक्षा गरेको सानो आँपको वृक्षलाई र आँपको हाँगाहरूमा जेलिएको जायी नामक लतालाई देखेर उसको समीपमा गएर ''म जाँदै छु'' तिमीलाई कुनै प्रकारको अनिष्ट नहोस् भनेर आर्द्रमनद्वारा आशीर्वाद दिँदै यस्तो भनेकी छन्—

**''मा भवन्तमनलः पवनो वा**
**वारणो मदकलः परशुर्वा।**
**वज्रमिन्द्रकरविप्रसृतं वा**
**स्वस्ति तेऽस्तु लतया सह वृक्ष!।।''**

हे आँपको वृक्ष! तिमीसँग बेरिएर तिम्रो छेउमै रहेको सुकुमार लताको साथमा तिम्रोलागि स्वस्ति (मङ्गल) होस्। **(भवन्तम् अनलः मा)** तिमीलाइ दावाग्निले ....... नगरोस्। **(पवनः मा)** झंझामारुतले ..... नगरोस्। **(मदकलः वारणः मा)** मदमत्त हात्तीले ..... नगरोस्। **(परशुर्मा)** बञ्चरोले ..... नगरोस्। **(इन्द्रकरविप्रसृतं वज्रं वा मा)** इन्द्रको हातबाट फुत्किएको वज्रायुधले ....... नगरोस्। यसरी यो श्लोकमा बताइएको छ। यसमा प्रत्येक वाक्यमा सन्दर्भ अनुसार रहनुपर्ने अलग अलग क्रियापदहरू कुनै पनि प्रयोग गरिएका छैनन्। ती सबैलाई हामीहरूले आफै ऊहा गरेर पूरा गर्नुपर्ने हुन्छ। तर ती वचनहरू बोल्नेवाली ती कन्याले तत्तत् आपत्तिहरूलाई स्मरण गर्दाखेरि आफूलाई प्राप्त भएको भयावेशद्वारा कम्पित हुँदा मुख नखुलेर ती क्रियापदहरूलाई

उच्चारणगर्न सकेकीछैनन्। तिमीलाई कहिल्यै पनि दावाग्निले नजलाओस्। झंझामारुतले नउँखालोस् मदगजले (मदमत्तहात्तीले) हाँगाहरू नभाँचिदियोस्। आटविक (जंगलमा रहनेव्यक्ति) को बञ्चरोले समूल विनाश नगरोस्। चट्याङ तिमीमाथि परेर तिमीलाई भस्म नगरोस् भनेर यसरी स्पष्टरूपमा 'न' भन्ने निषेधभन्दा पहिला तत्तत् क्रियापदहरूलाई प्रयोग गर्नुपर्ने आवश्यकता हुँदाहुँदै पनि मृदु मन भएकी ती कन्याले तत्तत्पदहरूलाई मनमा भावना गर्दाखेरि उपस्थित भएको दुःखावेशले गर्दा पूर्णरूपेण क्रियापदहरूलाई उच्चारण गर्न नसकेर असम्पूर्णरूपमा नै वाक्यहरूलाई प्रयोग गरेकीछिन्। तत्तत् दशाहरूलाई अनुसन्धान गर्दाखेरि भिन्नभिन्न ढङ्गले उनको मनमा उत्पन्न भएका व्याकुलताका, यी असंपूर्ण वाक्यहरू व्यञ्जक हुन्।।

त्यसैगरी यस तमिलगाथामा पनि विना क्रियापदकै यी आल्वार्ले वाक्यलाई समापन गर्नुभएको छ। यो उहाँमा भएको भावावेशको व्यञ्जक हो भनेर ग्रहण गर्नुपर्दछ। क्रियापदलाई छन्दस्मा राख्न नसकेर छोडिदिनुभयो भनेर भावना गर्न मिल्दैन। पाण्ड्यराजाको महासभामा आफ्नो वाग्वैभवद्वारा विविधमतस्थ व्यक्तिहरूलाई परास्त गर्ने सामर्थ्य एवं प्रतिभाले सम्पन्न श्रीआल्वार्ले, सानो क्रियापदलाई पाशुरमा अटाउनहाल्न सक्नुभएन भनेर शंका गर्नको लागि अवकाश नै छैन।।

अथवा निरवधिक सौन्दर्य—सौकुमार्यादिगुणसम्पत्तिले युक्त भगवद्विग्रहको दर्शन गर्दाखेरि केहीबेर मङ्गलाशासन गरेर फेरि एकक्षण रोक्दाखेरि सन्तृप्ति हुँदैन। त्यही भएर असंतृप्तिसूचकको रूपमा क्रियापदलाई प्रयोग नगरीकन वाक्यलाई रोकिदिनुभएको थियो। ''निरन्तर मङ्गल होस्'' भनेर सूचित गर्नु नै यसको भाव हो भनेर पनि ग्रहण गर्न सकिन्छ। यो पहिलो गाथा, माथि बताइने अरु ११ गाथाहरूको प्रधान शीर्षिकाजस्तो हो। शिष्टजनहरूले पत्रव्यवहार आदि गर्दा खेरि **''श्रीमते रामानुजाय नमः''** भनेर शुभसूचक वाक्य लेख्ने गर्नुहुन्छ। सामान्यव्यक्तिहरूले विशिष्टव्यक्तिहरूलाई लेख्दा पनि त्यस्तो व्यवहार हुन्छ। ती वाक्यहरूमा **''अस्तु''** भन्ने क्रियापद नदेखिँदा पनि हामीहरूले अध्याहार गरेर अर्थलाई पूरागर्ने गर्दछौं। त्यसैगरी यो पाशुर पनि यस प्रबन्धको आमुखवाक्यजस्तो हो। त्यही भएर क्रियापद नभएतापनि दोष छैन भनेर समर्थन गर्न सकिन्छ।।१।।

पहिलो गाथाको विवरण समाप्त भयो

OO

## दोस्रो गाथा

प्रथमगाथामा भगवान्‌को दिव्यमङ्गलविग्रहसौन्दर्य र उहाँमा भएका सौलभ्यादिगुणहरूको लागि श्रीविष्णुचित्तसूरिले मङ्गलाशासन गर्नुभयो। अब यो गाथामा उभयविभूतिविशिष्ट समस्त भगवत्स्वरूपको मङ्गलाशासन गर्दैहुनुहुन्छ। प्रकृतिमण्डलमा

विद्यमान समस्तजीवराशिलाई मिलाएर (**अडियोमोडुम्**) हामी सबै भनेको हुनाले भगवान्, उहाँको वक्षःस्थलमा विराजमान श्रीलक्ष्मीजी र भगवान्का उभयहस्तहरूमा रहेका सुदर्शन–पाञ्चजन्यहरूलाई मिलाएर साथै नित्यविभूतिमा रहनेवाला समस्त परिजनवर्गकोलागि पनि "**पल्लाण्डु**" भनेर गाएको हुनाले समग्र भगवत्स्वरूप, आफूले गरेको मङ्गलाशासनको उद्देश्य हो भन्ने विषय स्पष्ट हुन्छ।।

**मूल–**

**अडियोमोडुम् निन्नोडुम् पिरिविन्नि आयिरं पल्लाण्डु**
**वडिवाय् निन् वलमाविनिल् वाजगिन्न मङ्गैयुम् पल्लाण्डु।**
**वडिवार् शोदि वलत्तुरैयुम् शुडराजियुम् पल्लाण्डु**
**पडैपोर् पुक्कु मुजङ्गुम् अप्पाञ्चशन्नियमुम् पल्लाण्डे।।२।।**

**प्रतिपदार्थ–**

**अडियोमोडुम्** = हामी दास (सेवक) हरूको साथमा

**निन्नोडुम्** = स्वामीकोरूपमा विराजमान हजुरको साथमा (मिलाएर)

**पिरिवु इन्नि** = विश्लेष नहुनेगरी

**पल् आयिरम् आण्डु** = अनेकहजारवर्ष (मंगल होस्)

**वडिवाय्** = शोभायुक्त

**निन् वलमार्विनिल्** = हजुरको वक्षःस्थलको दायाँ भागमा

**वाजगिन्न** = आनन्दपूर्वक निवास गर्नेवाली

**मङ्गैयुम्** = लक्ष्मीजीको लागि

**पल्लाण्डु** = अनेकवर्ष शुभ होस्

**वडिवु आर् शोदि** = विलक्षण तेजको साथमा प्रकाशमान

**वलत्तु उरैयुम्** = दायाँ हातमा निवास गर्नेवाला

**शुडर् आजियुम्** = जाज्वल्यमान सुदर्शनचक्रको लागि

**पल्लाण्डु** = अनेक संवत्सर मंगल होस्

**पडै पोर् पुक्कु** = सेनाले संकुल युद्धमा प्रवेश गरेर

**मुजङ्गुम्** = ध्वनि गर्नेवाला

**अप्पाञ्चशन्नियमुम्** = पाञ्चजन्यनामक शङ्खको लागि पनि

**पल्लाण्डु** = अनेक वर्ष मङ्गल होस्।।

**विवरण** – यस पाशुरको पहिलो चरणमा हामी (दास) हरूको साथमा हजुरको मंगल होस् भनेर बताइँदै छ। थोरै पनि स्वार्थको अपेक्षा नराखीकन भगवत्समृद्धिको मात्र अपेक्षा गर्नेवाला यी विष्णुचित्त आल्वार्ले यतिबेला आफूलाई पनि मिलाएर दुवैजनाको नित्यमङ्गलको अपेक्षा गर्नु के उचित छ त? भन्ने आक्षेप उपस्थित हुन सक्छ। मङ्गलाशासन नामक यो कैङ्कर्यको लागि आफूजस्ता परिजनवर्गहरूको पनि आवश्यकता भएको हुनाले आफू नहुने हो भने भगवान्को मङ्गलाशासन हुँदैन कि भनेर आफूजस्ता अरू भक्तवर्गहरूलाई पनि मिलाएर **(अडियोमोडुम्)** भनेर बताउनुमा कुनै आक्षेप (दोष) छैन। कुनै एक फलको उद्देश्य गरेर यजमानले कार्यहरूको आचरण

गर्दाखेरि त्यो यजमानलाई र ऋत्विक्हरूलाई यज्ञको फल मिलोस् भनेर ''**आयुराशास्ते**'' इत्यादि वैदिकमन्त्रहरूद्वारा आशीर्वाद प्रदान गरिएको हुन्छ। वास्तवमा त्यो यजमानले त्यतिबेला आयुष्यरूप फललाई नचाहँदा पनि उसले चाहेको यज्ञको फल सिद्ध भएर त्यसलाई अनुभव गर्नकोलागि आवश्यक आयुष्य पनि अपेक्षित भएको हुनाले त्यहाँ प्रधानफलको अङ्गको रूपमा आयुष्य मिलोस् भनेर आशीर्वाद गरिन्छ। त्यसैगरी प्रस्तुतमा पनि भगवान्को मङ्गलाशासनको लागि आफ्नो पनि आवश्यकता भएको हुनाले आफ्नो लागि पनि मङ्गल बताउनुमा कुनै आक्षेप छैन।।

त्यसो हो भने ''मेरो साथमा हजुरको पनि'' नभनेर ''हामी दासहरूको साथमा'' भनेर विशेषणपूर्वक बताउनुको भाव के हो? भन्ने सन्देह हुन सक्छ। समस्त जीवहरूको, भगवद्दास्य नै सहजस्वरूप हो भन्ने ज्ञानले युक्त भएकोहुनाले उहाँले (**अडियोम्**) भनेर प्रयोग गर्नुभएको छ। जीवको स्वरूप के हो पामरव्यक्तिलाई थाहा हुँदैन। केहीजनाले देह नै आत्मा हो भन्ने भावना गरेर (अहम्) म भन्ने पदको अर्थको रूपमा देहलाई नै बताउँदछन्। मायावादी नामक अद्वैतशास्त्रकर्ताहरूले अन्तःकरणलाई नै जीवको रूपमा बताउँदछन्। सांख्य नामक अर्को शास्त्रकर्ताले जडप्रकृति देखि भिन्न, स्वयंप्रकाश र स्वतन्त्र ज्ञानलाई नै अहंशब्दार्थभूत आत्माको रूपमा बताएका छन्। यसरी पामरहरूले र केहीजना

शास्त्रकर्ताहरूले पनि आ–आफ्नो स्फुरण अनुसार आत्मलक्षण बताएका छन्। यी विष्णुचित्तसूरि आत्मस्वरूप निर्णयमा त्यस्तो व्याकुलतायुक्त हुनुहुन्न। अतः उपनिषत्सिद्धान्तमा **''यस्यास्मि सोऽहम्''** इत्यादि वाक्यहरूमा बताइए अनुसार निश्चितरूपमा उहाँले भगवत्स्वरूपलाई जान्नुभएको थियो। त्यहीभएर भगवान्सँग भएको आफ्नो सम्बन्धलाई जानेर **(अडियोम्)** दासभूत हामीहरू भनेर बताउनुभएको छ। कर्मसम्बन्ध अनुसार तात्कालिक रूपमा मिल्ने तत्तत् देहसम्बन्धहरू स्थिर होइनन्। अतः आफ्ना स्वामी भगवान्सँग विद्यमान स्थिर सम्बन्ध नै आफ्नो (जीवात्माको) स्वरूप हो भनेर श्रीआल्वार्ले सप्रमाण निर्णय गर्नुभएको छ।।

यदि त्यसो हो भने दासभूत मेरो साथमा हजुरलाई मङ्गल होस् नभनेर **''अडियोम्''** भनेर बहुवचनको रूपमा बताउनमा उहाँको भाव के हो त? भन्दा—यहाँ आल्वार् एकाकीको रूपमा आफूले मात्र मङ्गलाशासन गरेर तृप्त रहनेवाला व्यक्ति हुनुहुन्न। आफूजस्तै इतर जीवहरू पनि भगवान्का दास नै हुन् भने यो मङ्गलाशासन कैङ्कर्यमा उनीहरूलाई पनि मिलाउनुपर्छ भन्ने विशाल अभिप्राय उहाँको थियो। त्यही भएर हजुरहरू पनि आएर मङ्गलाशासन गर्नुहोस् भनेर माथिका गाथाहरूमा अरूलाई पनि आह्वान गर्दैहुनुहुन्छ। भागवतगोष्ठी, पूर्णरूपमा रहोस् भन्ने उहाँको अभिलाषा हो।।

(निन्नोडुम्) हजुर सर्वस्वामी हुनुहुन्छ। अन्य देवताहरूजस्तै र माता–पितृ–आचार्य जस्तो केहीजनाको मात्र स्वामी हुनुहुन्न। सबैजनाले मिलेर हजुरको मङ्गलाशासन गर्दा पनि पर्याप्त हुँदैन भनेर स्तुति गर्ने योग्य परमपुरुष हुनुहुन्छ हजुर। पछाडिको गाथामा "**मणिवण्णा**" भनेर दिव्यमङ्गलविग्रहको मङ्गल बताएको हुनाले "**निन्नोडुम्**" भन्ने यो पदद्वारा भगवान्को सत्य–ज्ञानानन्दस्वरूप दिव्यात्मस्वरूपको (**पिरिवु इन्नि**) कुनै दिन पनि विश्लेष नहुनेगरी भन्ने अर्थ हो। जसरी जीव र ईश्वर दुवै नित्य हुन् त्यसैगरी यी दुवैको बीचमा रहेको सम्बन्ध पनि आफ्नो मङ्गलाशासनद्वारा विच्छेद नहुनेगरी नित्य अनुवृत्त भएर रहोस् भन्ने श्रीआल्वार्को अभिप्राय हो। (**आयिरं पल्लाण्डु**) केही हजार वर्ष अर्थात्–कालतत्त्व रहँदासम्म मङ्गल होस् भन्ने यो पहिलो पादको भाव हो।।

(**वडिवाय् निन् वलमार्विनिल् वाजगिन्न मङ्गैयुम् पल्लाण्डु**) यसरी मङ्गलाशासन गर्नेवाला श्रीविष्णुचित्तसूरिको आवेदना (कष्ट) लाई दूर गर्नको लागि भगवान्ले आफ्नो वक्षःस्थलमा विराजमान श्रीलक्ष्मीदेवीको दर्शन गराएर मङ्गलस्वरूपिणी श्रीलक्ष्मीजीले मेरो वक्षःस्थलमा निवास गर्दागर्दै हजुरलाई भय हुने त कारणै छैन। आफ्नो कटाक्ष (दृष्टिपात) मात्रले सबै प्रकारका अमङ्गलहरूलाई हटाएर समस्त सन्मङ्गलहरू प्रदान गर्नसक्ने लक्ष्मीजी मेरो साथमा रहँदारहँदै के ममा अमङ्गलहरूले प्रवेश

गर्न सक्छन् र? भनेर ईश्वरले आश्वासन दिंदा श्रीआल्वार्ले भन्नुहुन्छ–हजुरहरू दुवैजना नित्य नै अनपायरूपमा रहनुहोस्। यो दिव्यदम्पतिको सन्निवेशको लागि शाश्वतरूपमा मङ्गल होस्। यस गोष्ठीको लागि कहिल्यै पनि अनर्थ नहोस् भनेर श्रीआल्वार्ले यो दोस्रो पादमा मङ्गलाशान गर्दैहुनुहुन्छ। (वडिवु) भनेको उज्ज्वल तेज भन्ने अर्थ हुन्छ। श्रीलक्ष्मीजीको सन्निधानको कारणले गर्दा भगवान्को श्रीविग्रहमा विलक्षण तेज प्राप्त भएको विषयलाई (वडिवार्) भन्ने पदले विवरण गरेको छ।।

आफूसँग आएर सहायता माग्नेवाला रावणलाई उपदेश दिंदै मारीचले ''**अप्रमेयं हि तत्तेजो यस्य सा जनकात्मजा**'' भनेर रामको प्रभाव बताएको थियो। जनकराजपुत्री भगवती सीतादेवीलाई स्वीकार गरेपछि उहाँको सन्निधानले गर्दा अजय्य तेजस्स्वरूपको साथमा विराजमान श्रीरामजीसँग विवाद गरेर के विजय प्राप्त गर्न चाहँदैछस्? त्यो तेरो लागि असाध्य छ भनेर मारीचले रावणलाई बोध गराएको थियो। यस सन्दर्भ अनुसार रामको प्रभावको विषयमा श्रीसीताजीको सन्निधान, प्रधान कारण हो भन्ने विषय अवगत हुन्छ। यसैगरी ''**श्रद्धया देवो देवत्वमश्नुते**'' भन्ने वेदवाक्यको अनुसार नारायण परदैव बन्नमा लक्ष्मीदेवीको सन्निधान कारण हो भनेर बताइएको छ। यो वेदमन्त्रमा '**श्रद्धा**' शब्दको लक्ष्मीजी भन्ने अर्थ हो। पुरुषसूक्तको

"**ह्रीश्च ते लक्ष्मीश्च पत्न्यौ**" इत्यादि प्रमाणवचन अनुसार पनि जो लक्ष्मीजीको पति हो त्यही नै परमात्मा हो भनेर निर्णय गरिएको विषय पनि सुप्रसिद्ध छ।।

लक्ष्मीजीको सम्बन्धलाई लिएर उहाँका पति परमात्मा हुनुहुन्छ भन्ने हो भने के त्यो परमात्माको न्यूनतापादक हुँदैनर? भन्ने केही जनालाई सन्देह हुन सक्छ। कान्तिले गर्दा नै रत्नको राम्रो प्रशस्ति हुन्छ र पनि रत्न महान् होइन भन्न सक्छौं त? त्यसैगरी पुष्पको प्रधानता पनि वासनाले गर्दा नै हुन्छ र पनि पुष्पको महत्त्वमा कुनै न्यूनता हुँदैन। त्यसैगरी रत्नको प्रभाझैं, पुष्पको सुगन्धझैं भगवान्‌सँग नित्यनिवास गर्नेवाली नित्यानपायिनी श्रीलक्ष्मीजीको सम्पर्कद्वारा भगवान्‌को प्रभाव विस्तृत हुन्छ भनेर बताइएता पनि त्यो भगवद्वैभव नै मानिन्छ। त्यसबाट परमात्माको अपकर्ष बताइएको हो भन्ने विषय सिद्ध हुँदैन। श्रीपराशरभट्टर्स्वामीजीले **श्रीगुणरत्नकोश** नामक स्तोत्रको "**स्वतः श्रीस्त्वम्**" भन्ने श्लोकमा र "**तव स्पर्शादीशम्**" भन्ने अर्को श्लोकमा पनि यो पछाडि बताइएको रत्नदृष्टान्तलाई र पुष्पको दृष्टान्तलाई देखाएर यसैगरी लक्ष्मीजीको सम्बन्धद्वारा भगवान्‌लाई प्राप्त भएको वैभवको समर्थन गर्नुभएको छ। ती विषयहरूलाई प्रस्तुत प्रसङ्गमा स्मरण गर्न सकिन्छ।।

अथवा "**वडिवु**" भन्ने पदको आभरण भन्ने पनि अर्थ भएको हुनाले कौस्तुभरत्न आदिझैं श्रीलक्ष्मीजी भगवान्को वक्ष:स्थलमा आभरणको रूपमा प्रकाशमान रहनुहुन्छ भन्ने अर्थ पनि बताउन सकिन्छ। त्यस्तो हजुर (परमात्मा) को वक्ष:स्थलको दायाँ भागमा हस्तालिङ्गनद्वारा समीपमा लिने योग्य भएर अतिसन्निहितरूपमा श्रीजी विराजमान हुनुहुन्छ। पद्मवासिनी श्रीमहालक्ष्मीजीको लागि कमलभन्दा पनि यो भग वद्वक्ष:स्थलनिवास नै आनन्दप्रद एवं परमहृद्य भएको हुनाले उहाँले "**अगलगिल्लेन् इरैयुम्**" क्षणकाल पनि मैले आफ्नो स्वामीको वक्ष:स्थललाई छोडेर रहन सक्दिन भनेर बताउनु हुन्छ। "**मङ्गै**" भन्ने द्राविड पदले कौमारावस्थामा रहेर तत्काल यौवनमा प्रवेश गर्दै भएकी मुग्धनायिकालाई बोध गराउँदछ। कौमारावस्था पूरा भएर यौवनको प्रारम्भदशामा उहाँ (श्रीलक्ष्मीजी) हुनुहुन्छ। यस अनुसार "**युवा कुमार:**" भन्ने श्रुतिवाक्यमा बताए अनुरूप भगवान्को श्रीविग्रह पनि तत्काल यौवनाविर्भावलाई प्राप्त गरेको दशामा रहेको हुनाले "**तुल्यशीलवयोवृत्ताम्**" भनेर श्रीरामायणमा बताए अनुसार परस्पर समानदशामा दुवैजना हुनुहुन्छ भनेर ग्रहण गर्नुपर्दछ।।

लक्ष्मीजीको मङ्गलाशासन गरिएको यो (मङ्गैयुम् पल्लाण्डु) भन्ने वाक्यद्वारा उहाँको साथ–साथमा भगवत्सन्निधिमा नित्य

सन्निहित भएर विराजमान रहने भूदेवी, नीलादेवी आदि दिव्यमहिषिवर्गलाई पनि यहाँ ग्रहण गर्नुपर्दछ। सबैलाई मङ्गल प्रदान गर्नेवाली श्रीलक्ष्मीजीलाई पनि यस राक्षसभूयिष्ठ प्रपञ्चमा कुनै अनर्थ हुन्छ कि? भन्ने भयको साथमा श्रीविष्णुचित्तसूरिले मङ्गल गाउँदै हुनुहुन्छ।।

**(वडिवार् शोदि वलत्तुरैयुं शुडराजियुम् पल्लाण्डु)** भगवान्‌को श्रीविग्रहमा नूतन कान्तिको वर्षा गर्दै उहाँको श्रीहस्तमा प्रकाशमान रहने चक्रायुधको लागि मङ्गल होस् भन्ने यो वाक्यको अर्थ हो। मेरो लागि कुनै पनि अनर्थ नहुनेगरी शिलाको प्राकारले झैं रक्षणको व्यवस्था गर्नेवाला सुदर्शन आयुध मेरो साथमा हुँदाहुँदै हजुर किन डराउनुहुन्छ? भनेर भगवान्‌ले बताउँदा त्यो चक्रायुधको लागि पनि कुनै अनर्थ होला भन्ने आशङ्काको साथमा श्रीविष्णुचित्तसूरिले मङ्गलाशासन गर्दैहुनुहुन्छ। नीलमेघजस्तो कान्ति भएको भगवान्‌को श्रीविग्रहमा पहँलो कान्तिको साथमा प्रकाशमान हुने यो सुदर्शनचक्रको शोभाविशेषको प्रसारले गर्दा रमणीय सौन्दर्य उत्पन्न भयो। त्यही भएर उपनिषद्‌ले पनि **''पुरुष कृष्णपिङ्गलम्''** भनेर बताएको छ। देहको नीलवर्णमाथि सुवर्णजस्तो पहँलो सुदर्शनजीको कान्ति प्रसरित भयो भन्ने भाव हो। भगवान्‌को श्रीहस्तमा रहेर यी सुदर्शनजी, आयुधको रूपमा रक्षक भएता पनि प्रभुको श्रीविग्रहको कान्तिलाई फैलाउने

आभरणको रूपमा पनि प्रकाशमान रहने भएको हुनाले यो सुदर्शनको तेज, नित्य--निरन्तर प्रकाशमान रहोस् भनेर मङ्गल गाउनुभएको छ।।

**(पडैपोर् पुक्कु मुजङ्गुम् अप्पाञ्चशन्नियमुम् पल्लाण्डे)** सेनासङ्कुल युद्धमा प्रवेश गरेर गम्भीररूपमा ध्वनि गर्ने पाञ्चजन्य नामक त्यो शङ्खको ध्वनिको लागि पनि मङ्गल होस् भन्ने अर्थ हो। पाञ्चजन्यशङ्खको ध्वनि शत्रुहरूको हृदयलाई भेदन गर्नेगरी भयङ्कररूपमा र भक्तहरूको हृदयमा आनन्द प्रदान गर्नेगरी गम्भीररूपमा रहन्छ भनेर बताइएको छ। महाभारतयुद्धको आरम्भमा श्रीकृष्णले फुकेको पाञ्चजन्यको घोषको वर्णनमा **''स घोषो धार्तराष्ट्राणां हृदयानि व्यदारयत्''** भनेर बताइएको छ। त्यसैगरी विष्णुपुराणमा पनि देवदानवयुद्धको प्रसङ्गमा--भगवान्ले बजाएको पाञ्चजन्यशङ्खको ध्वनिद्वारा दानवहरूको बल घटेको विषय **''यस्य नादेन दैत्यानां बलहानिरजायत''** भनेर वर्णन गरिएको छ। यस्तो प्रभावले युक्त शङ्खको मङ्गलाशासन गर्ने किन? भन्दा यो शङ्खको ध्वनिद्वारा भगवान् फलाना स्थानमा हुनुहुन्छ भनेर जान्नको लागि अवकाश मिल्ने भएकोले त्यो शङ्ख लाई र भगवान्को श्रीविग्रहलाई राक्षसहरूद्वारा कुनै अनर्थ नहोस् भनेर मङ्गलाशासन गर्नुभएको छ।।

यी दुई गाथाहरूले अष्टाक्षरीमहामन्त्रको अर्थलाई बोध

गराउँदछन् भनेर पूर्वाचार्यहरूले बताउनुभएको छ। कसरी त? भन्दा– **(अडियोमोड्डुम्)** भन्ने पदले प्रणवको अर्थलाई बताउँदछ। अकारवाच्य परमात्माको लागि, मकारवाच्य जीव दास हो भनेर बताउनु नै प्रणवको मुख्यार्थ हो। **(अडियोम्)** भन्ने पदले उक्त अर्थलाई आविष्कार गरेको छ। अब पहिलो गाथाको **(पल्लाण्डु)** भन्ने पदले, नमश्शब्दको अर्थलाई सूचित गरेको छ। नमश्शब्दले झैं **(पल्लाण्डु)** भन्ने पदले पनि भगवत्सन्निधिमा आफ्नो विधेयतालाई प्रकट गरेको छ भनेर पछाडि नै बताएका थियौं। अब **(मल्लाण्ड तिण्डोल्)**, **(मणिवण्णा)** भन्ने यी दुई पदहरूले भगवान्को दिव्यमङ्गलविग्रहलाई बताउँदछन्। **(अडियोमोड्डुम्)** भन्ने पाशुरले पूर्णरूपेण भगवान्का सुदर्शन–पाञ्चजन्य अनन्त–गरुड–विष्वक्सेनादि नित्यविभूतियोगलाई बताएकोहुनाले नारायणपदार्थको विवरण भयो। उभयविभूतिहरूको आफू आधार भएर व्यापकरूपमा रहनुभएकोछ भनेर नारायणशब्दार्थको शास्त्रहरूमा विवरण गरिएको छ। मन्त्रको अन्तिममा रहेको **'आय'** भन्ने चतुर्थीविभक्तिको अर्थ मानिने कैङ्कर्यरूप पुरुषार्थप्रार्थनाको **(पल्लाण्डु)**, **(उन् शेवडि शेव्वि तिरुक्काप्पु)** भन्ने पदहरूद्वारा विवरण गरिएको छ। भगवान्को नित्य मङ्गलाशासन गर्नु नै दासभूतव्यक्तिको उत्तम कैङ्कर्य हो भन्ने अष्टाक्षरीमन्त्रको सारभूत–यी दुई गाथाहरूको तात्पर्य हो।।

–स्वस्ति–

## अन्य उपलब्ध कृतिहरू

१. मधुरोपहार
२. अमृतलहरी
३. श्री वैष्णवसौभाग्यम्
४. भगवत्क्षमाको महिमा
५. रामायणमा छिपेका रहस्यहरू